# संचालकको पाती

साहित्य कस्तो हुनुपर्दछ, भन्नेतिर मलाई जानु छैन। मलाई त यति भन्नु छ कि 'बिहानीपख' को उद्देश्य के त ? मलाई लाग्द छ कि जति पनि पत्रिका निस्कन्छन् ती सबैले साहित्यको खाँचो नटारेर केवल आफ्ना मनका कल्पनाको खाँचो मात्र टार्दछन्। मेरो भनाई यो होइन कि जति पत्रिकाहरू निस्कन्छन् तिनीले साहित्यको खाँचोनै टार्दैनन्। प्रायः त्यस मध्येका पत्रिका विरलै पाइन्छन्। त्यसैले नै यो 'बिहानीपख' पनि आफ्ना खोला-नालाका नवीन कल्पनाको खाँचो टार्न निस्केको हो। गुल्मीको प्रतिनिधित्व गर्न उत्सुक यस बिहानीपखले गुल्मीका कोपिलाहरूलाई झक-झकाएर फकाउला भन्ने मलाई लाग्दछ। न केवल गुल्मीका नवपल्लवित कोपिलाहरूलाईनै फकाउन चाहन्छ, अपितु यसले पूरा नेपाल भरका कोपिलाहरूलाई फकाउने आकांक्षा पनि राख्दछ।

"बिहानीपख" यसतो भनेर पालिस लगाउन मलाई छैन, जे जस्तो छ पाठकहरूको समक्ष प्रस्तुत छँदै छ। बिहानीपखको यो दोस्रो पुष्प हो। आशा छ निकट भविष्यमा यसले राम्रोसंगनै आफ्नो अभावलाई पूरा गर्नेछ। यद्यपि यसको आर्थिक स्थिति यस समयमा त्यति राम्रो छैन तापनि भविष्यमा त्यो पनि यसले पूरा गर्ला जस्तो लाग्दछ। तमाम गुल्मीका शिक्षण संस्थाहरूमा पढ्ने बालक-बालिकाहरूमा पनि उत्साह र प्रेरणा दिएर उनीहरूको जीवनमा यौटा नौलो पन भरिदिनेछ भन्ने मलाई लाग्दछ। यो यस समयमा केवल कल्पनाको खाँचो टार्न निस्केको हुनाले यस भित्रका रचनाहरू पनि केवल कल्पना प्रधान मात्र भए पनि पछि-पछि आफ्नो खाँचोलाई स्वयं पूर्णगर्नेछ।

'उत्साहनै आविष्कारकी जननी हुन्' त्यसै कारणलेनै यो विहानीपख पनि नवजात शिशुको तरह पाठकहरूको समक्ष बामेसर्दै आइरहेको छ। यसमा तमाम त्रुटिहरु त छन्, परन्तु मैले पैले पनि भनिसकें कि खोला, नाला, पाखा, पखेराका नयाँ आँकुराहरूको कल्पना मात्र हो। अरु यसको के कसरी, किन ? भन्ने चीजहरू आयोजकको विवरणवाट नै पाठक वर्गले ज्ञातगर्नुंहुनेछ। हाम्रो परिवारसंग म समितिको तर्फवाट क्षमा माग्दछु कि सबैका कल्पनाहरू यसमा यस पटक स्थानाभावले राख्न सकेनौं दुःख छ। भविष्यमा अवश्य यसको पूर्ति हुनेछ।

ध्रुव भट्टराई



# फटाहालामखुट्टे

—बाबुराम शर्मा, आचार्य द्वि. व.

महेन्द्र हाईस्कूल तंघास, गुल्मी

लामखुट्टे फटहा समान यिनीहुन् बस्छन् अँध्यारो तिर,
लज्जा छैन गरीबको खुन चुसी बँच्नु गरीबकै भर।
अंधा, व्यग्र तथा समस्त दुःखको त्यस अन्धकार्मा रही,
पल्टेका जनलाई शोषण गरी राता भुँडी पार्दछन्॥
आई कान विषे गरी घुनु-घुनु प्यारो गरेझैं गरी,
आखिर ज्यू धनको गराई वरवाद् भाग्छन् लिई स्वार्थता।
औलो निर्मुलकारी पद्धति यहाँ देखेर नेपालको,
आफ्नै कीचड़मा गए कि अथवा आयो कि ठण्डी दिन॥

धुर्कोट अरौंदी, गुल्मी



# बिहानीपख !

—लेखनाथ 'ज्ञवाली'

चारैतर्फ निशा छ सुप्त-दुनियाँ निद्राविषे मस्त छन्,
न्यानो गूँड छ पन्छिको वन-गिरी गानाविना शून्य छन् ।
तारा टिल्मिल गर्दछन् विरहमा रुन्छिन्वियोगी चरी,
पुग्दे भेट बनेर प्यासि दिलमा हाँस्दै विहानीपख ! ।।

निश्रं को अनिकालले जिउँनुनै साथी छ खाली हलो,
खानू छैन रूखो-सुखो चिजविना मीठो र क्यै स्वादिलो ।
दिउँसोको पसिना छ भीत्र मुटुमा तातो त्यहाँ बाफ छ,
थाकेको जनलाई तङ्ग नगरी ब्युँझा विहानीपख ! ।।

आफ्नू भाईसंगै खसाई दिलका आँशू पला-मन्तिर,
टुक्रा एक जुठो सितो वटुलने थाङ्ना भिरी झल्लर ।
लाली चढ्दछ कि भनेर कहिले हेर्ने हिमानीतिर,
नाङ्गो एक भिखारिको रुखमनी पुग्दे बिहानीपख ! ।।

फुलने जीवनको मिठास मधुरो हा ! कल्पना मैं बित्यो,
आफ्नो छैन सहाय मर्म दिलको जानी अँगालो दिने ।
रोई बित्दछ रातको हर-पला फोश्रो कुनै बारमा
मुर्झेको फुललाई हास्यमुखले चुम्दे बिहानीपख ! ।।

प्यारी जन्म-धरित्रिको शिर ऊँचो पार्ने ठुलो लक्ष्य छ,
आफ्नो उज्ज्वल-बिम्बलाई युगको साथै उँभो लग्नु छ ।
लाखौं विघ्न र दैन्यले हरघडी च्याँपेर वेचैन छ
नौलो साहस, छात्रको-सपनिमा फुल्दे बिहानीपख ! ।।

बोहा, गुल्मी



# ए···म सास फेर्न बिर्सुला है !

—मोदनाथ 'प्रश्रित'

सा० शास्त्री, आयुर्वेदाचार्य

मेरो त चौपट्ट नराम्रो आत्तिने बानी छ ।
दुई वर्षमा आएको आफ्ना बाबुको चिठ्ठी हेर्न पनि भ्याउन्न ।
आमाले मावलबाट ल्याएको कुनी खान पनि भ्याउन्न ।
मलाई त कताहो कता ? दगुर्नै मन लाग्छ,—
अक्कासिनै मन लाग्छ ।
ब्रह्माजीले पनि नदेखेको ठाउँमा अहिल्यै पुग्न मनलाग्छ ।
भो म त भनिहालेनि उछिट्टिनै मनलाग्छ ।
मलाई रूसे राकेट देखेर उपद्रै हाँसो लाग्यो,
त्यो बिचरा !—म विजुली बन्दा कछुवा बन्न सक्तै न ।
मेरा पछि-पछि बूढ़ा ब्रह्माजीले दगुर्ने ह्याउ गर्दा—
बिचराको दम बढेर चीत परे !
अझ मसंग उच्चैःश्रवाले जोरी खोज्ने ।
सूर्य मसंग कसरि टक्कर लिन सकुन् ?——
जब कि मेरा कैयौं वर्षको उनको एक दिन हुन्छ !
यस्तो छिटो-छरितो भएको त राम्रै हो भनौं !
यसरि कुँद्न सक्नु पनि त राम्रै हो भनौं !
तर एउटा साँच्चै सोच्नु पर्ने कुरा के भने ?
यसरि दगुर्दा एकदिन—
ए···म सासफेर्न बिर्सुला है !

खिदिम, गुल्मी



# शान्ति ?

—रामचन्द्र पोखरेल

सूनसान निशाको साम्राज्यमा मौन सुदूर आकाशमा चमचमाइरहेका तारा तिम्रा शायद आस्पद होलान् ? निद्राको सिंहासन ७-८ मिनटको लागि उपेक्षा गरेर वाहिर खुला हावामा निक्लेको प्रत्येक भावुक टिङ्ग-टिङ्ग घण्टा-घरको आवाजमा तिमीतिर आकृष्ट भएर सुनेको-सुनै मुख वाएर तिम्रो लसपसले लत्पतिएको घण्टाको टिङ्ग ? मा सूनसान झन्-झन् बढ़ाउने सामञ्ज-स्यको एक न एक गम अज्ञात समयसंम चिन्तन गर्दो हो ! अज्ञात चालले कतिखेर हो कतिखेर तिम्रो चिन्तनमा उँभो फर्कँर यताउति बिखरिएंका मोतिका दाना जस्ता ताराहरूको रिमझिम एक टकले हेरेको-हेरै हुँदो हो ! शायद रातभरको लागि निद्राले स्वागत गरिराखेको कउँलो मस्तीको गद्दी-समेत रातभर बिसंदो हो !

भावुक वर्गको कल्पना हुँदो हो एक ताराको अनुपातमा लाखौं ताराको अनुपात, लाखौं ताराको अनुपातमा एक ताराको। तिनीहरूको सुदूर माथि टल्किरहेको ज्योतिको अधुरो छायाँ कुनै आदि पुरुषको प्रतिनिधित्वले अलि-अलि आभा पृथ्वीमा टल्किरहे छ, शायद गहिरो गरी निहालनेले मलाई आफनो अन्तःकरणमा थुनुवा बनाउला भन्ने ड़रले ऊ सुस्त-सुस्त लुकी-लुकी चंकदो छ। शायद अँधेरा सूनसान रातका रात राखे, एकादंममा हुत्तिएर

मलाई भेट्टाउलान् भन्ने त्रास औ शङ्काले होला ? अँधेरो रातको वाद विस्तार-विस्तार जुनेली रात, एताउति अल्याङ्-मल्याङ् पार्न बीच-बीचमा आफ्नो मनोनानीले कैंचीले काटेका ठावैं पिच्छेका दिन । यति त होला ? तिनीहरूको रिम-झिम गर्ने नैसर्गिकतामा शायद ए शान्ति ! दुनियाँको लागि तल फर्केर इनार हेरे झैं घोप्टो परेर तिमी इशारा गर्दि हौ ? आफू जिन्दगीभर लुकेर पनि शायद भावुक वर्गको हृदयमा एक न एक मृगतृष्णिका भर्दि हौ ।

सूनसान निशाको सुदूरस्थित इशाराले शायद प्राचीन वर्गको अन्तःकरणले प्रकृतिले सजेको रिमझिम तिम्रो अनुरूप कुनै एकलासे भूमिमा आन्तरिक उज्यालामा औ वाह्य अन्धकारमा तिम्रो साक्षात्कार गरे हो । आफ्ना कल्प-कल्पान्तका अरवों पिढ़ीको खास-खास मार्ग-प्रदर्शनमा शायद मूर्तिमान् अपोह बनेहो ।

तिमीले दुनियाँको एक-एक अन्तःकरणमा पाइलो हाल्दछ्यौ, परन्तु पूरा-पूरा पक्षपातले तिम्रो क्रिया-विशद आजसंम प्रायः सवैको लागि नथाहा पाइने गम वनेको छ । अतः हे शान्ति ! मैले तिम्रीप्रतिको वाहिर-वाहिर कोतरेको प्रतिपत्तिको आधारमा तिम्रो जानकारी शायद वल्ल आज थाहा पाएँ । साथै म संसार औ दुनियाँको प्रतिनिधित्व गरेर तिमीमा धेरै-धेरै माग पेश गर्न पूरा-पूरा उत्कण्ठित छु । संसार मेरो विषयमा अप्रतिपत्तिरूप छ भन्ने आजसंमको तिम्रो गूढ़ व्यङ्ग कल्पना औ आशा अव थोरै दिन छिप्नेछ । म सवैको हृदय यसको प्रकाशनले भर्नेछु, उमङ्ग औ उत्साहले भरेर नछचल्किने, नवज्ने वनाउनेछु ।

तिमी निद्राको रूपले दुनियाँलाई आफ्नो चैतन्य जिन्दगीदेखि गिराउने प्रवृत्तिमा छौ । तिम्रो प्रवृत्ति शायद भावी दुनियाँमा नराम्रो मानिनेछ ? जब उँभो फर्केर दुनियाँले आफ्नो हृदयमा कुट-कुट गरेर तिम्रो इशारा भर्ने समय आउँछ, तिमीले त्यस अप्राप्य औ दिव्य समयमा मस्त अज्ञान औ कोरो मस्तीमा सुताइदिन्छ्यौ, भुलाइदिन्छ्यौ, नाना हिंसात्मक प्रवृत्तिको निदर्शन गर्ने थिएटर हालमा जवरजस्ती घुसाइदिन्छ्यौ औ आफ्नो सारा वैभवमा

जो आफ्नो कयौं ऐश-आराम संभ्भन्छन्, तिनीहरूको कयौं संपत्तिको अखर्व गर्व भविष्यमा स्वाहा हुने अशुभ सूचनाले लत्याइदिन्छयौ ।



## शुभ आशंसा

—आचार्य शेषराजशर्मा

भै एकता सुख समृद्धि विशिष्ट शान्ति,
नेपाल होस् अति समुज्ज्वल रम्यकान्ति ।
सम्पन्न कर्म कर यी सब ऐक्यशाली,
बन्दै रहुन् ससुख कार्य सबै समाली ।।

नेपाल होस् भुवनमा नयपाल देश,
साहित्य उन्नत रहोस् यसमा विशेष ।
राजा प्रजा सकलमा सहयोग भाव,
उत्पन्न भै बढ़िरहोस् यसको प्रभाव ।।

विद्या, कला, धन र सस्य हुउन् प्रशस्य,
नेपालमा स्थिर रहोस् स्पृहणीय सत्य ।
उद्योगको सतत योग गरेर नित्य,
राखुन् स्वधर्म प्रति सज्जन वर्ग चित्त ।।





के तिमीलाई दुनियाँ आपसमा फुलेर झुकेको देख्ने मन छैन ? के तिमी दुनियाँको एक-एक मुटुकलेजाको प्रत्येक बिन्दु-बिन्दुबाट पृथ्वीलाई छताछुल्ल

रगतले डुबेको देख्न चाहन्छयौ ? के अथवा खरानी-खरानी भएर उड़ेको देख्न चाहन्छयौ हो भने ? तिमीलाई त्यस रगतले मुछिन पर्नेछ । पृथ्वी कुहुने-छिन् । तिमीलाई कुईगन्ध सुघ्न पर्नेछ । पृथ्वीको कुईगन्धले हैन आफ्नै शरीरको कुईगन्धले तिम्रो आङमा किरा पर्नेछन् । त्यस खरानीले तिम्रो आँखानै बन्द गरिदिनेछ । त्यो खरानी पूरा-पूरा गैंस लिएर उड्नेछ । तिम्रो स्वागत पूरा-पूरा इन्तिजामले नगरी छोड्ने छैन । तिमीलाई विचलित हुन पर्नेछ, पश्चात्ताप मात्र हुनेछ । तिम्रो शान्ति भन्ने अलग नाम रहने-छैन । धर्मराज जेमराज भए झैं यशभन्दा वढ़ी तिम्रो अस्तित्व खतम हुनेछ । के यसले तिम्रो प्रतिष्ठा कल्प-कल्पान्त सुरक्षित रहने छ ? अथवा तिम्रो अस्तित्व जति पर गयो उति पर हुनेछ ? कहिलै अन्त हुने छैन ? तिम्रो इशारा कहिलै वर सर्नेछैन ? तल झर्नेछैन ? कुनै पनि कल्प-कल्पान्तका दुनियाँले नजीक देख्न पाउने छैनन् ?

अरोचको तिम्रो हार्दिक क्रूर प्रवृत्तिमा परिवर्तन ल्याउन नसक्दा दुनियाँ-को सुढ़ैमा विन्यास पारिदिन्छन् । किन भने, क्रूरमा अक्रूरता, अक्रूरतामा क्रूरता हुँदो रहेछ ! माने शान्तिबाट नै अशान्तिको हेतु भण्डाफोर भइसक्यो । यसैले दुनियाँ जबरजस्ती मए पनि सतृणाभ्यवहारीको बढ्दो संख्यामा उप-स्थित छ । तिमी आफ्नो प्रतिभा भ्रष्ट गरेर साहित्य-क्रान्तिको रूपमा दुनियाँ-लाई पानीमा नधकेल । संपत्तिको अखर्व गर्व माटो-माटो नबनाऊ । त्यसको सदुपयोग स्वरूप सबैमा समान आहार-विहार बाँड़ । तिम्रो हेतु पुरुषको मर्यादा ननाँघ । पारिवारिक जीवनमा नारीको अशान्तिमा—छोटो दृष्टिमा औ पाखे दृष्टिमा परिवारनै फुटेर सुख-शयल लिनाको कारणमा विन्यास त्यसको परिणाम कारण निहालेर हेरिदा भेटिने एउटा दोष नाहकमा तिमी नबन । किनभने, ब्रह्माण्डको लागि सूक्ष्माति-सूक्ष्म पदार्थनै २ मिनटमा विश्व ध्वस्त गर्ने एउटा विस्फोटक पदार्थ सिद्ध हुन्छ । सङ्घर्षमय जीवनमा औ मानवमा तिमीनै हेतु छौ भन्ने अपवाद नसुन । किनभने, प्रतिष्ठितको लागि जिउँदै अपवादको अपेक्षा मरण, कैयौं हितकर औ राम्रो छ । हुन त

(बाँकी पृष्ठ १२ मा)

# गुहार

—लक्ष्मी प्रसाद 'ज्ञवाली'

मनुष्यका मनुष्यनै समान सन्तति सबै,
विवेक भावना तथा समस्त लक्ष्य एकनै।
विचारको मदानिमा मथेर एकता सबै,
मनुष्यमा मनुष्यता गुहार आज गर्दछ।।

पराईता भन्यो भने समाजमा गनाउँछ,
स्वकीय दृष्टिले बरू मनुष्यता गराउँछ।
यहीं विचार भावमा डुबी-डुबी घुमी-घुमी,
मनुष्यमा मनुष्यता गुहार आज गर्दछ।।

यथार्थ वादका कथा कुथुङ्ग्रिका विचारका,
रविन्द्र आदिका महान् कपूर देनका व्यथा।
भुल्यौंभने मनुष्यमा विपत्तिका कथा खडा,
यसै भनी मनुष्यता गुहार आज गर्दछ।।

गरेर प्रेम हार्दता पतङ्ग ज्योतिमा फस्यो,
अनर्थ गर्जना गर्‍यो चटङ्ग भूमिमा पर्‍यो।
अनर्थको प्रवाहमा मनुष्यता बह्यो कहाँ,
विचार लौ मनुष्यता गुहार आज गर्दछ।।

कवि बनौं महान् बनौं विशिष्ट एकनै बनौं,
सबै भता भुतुङ्गनै उपाधिनै सबै भनौं।
मनुष्यका प्रति महान् मनुष्यले गरे कति,
कथा बनी मनुष्यता गुहार आज गर्दछ।।

जती मलाइ चाहना उती उलाइ चाहना,
हुँदा सबै कुचक्रका विभेदमा यता-उता।
घटी बढ़ी विधि—क्रमै, छ मुर्खता नदेखनु,
विचार लौ मनुष्यता गुहार आज गर्दछ।।

मनुष्य हौं मनुष्यता पुकार गर्दछौं भनें,
खुलागरी मिजाजले महत्वका सुझावले।
गनाउने कुरा सबै समाजमा सुधारदैं,
चलौं चलौं मनुष्यता गुहार आज गर्दछ।।

गेह्वाँ वादी, गुल्मी



---

(पृष्ठ १० को बाँकी)

नवीन जीवनमा प्रकृति स्वरूप उपादान तिमी छौ, तैपनि आखिर नष्ट-भ्रष्ट पार्ने अचिन्त्य निरतिशय दोषको प्रसूतिमा हलक्क दूध उम्ले झैं बढ़ेको नदीले झैं त्यसको किनारै-किनारमा बालुवै-बालुवाले पुर औ आखिर पूरा-पूरा ढाक्ने परिणाम ल्याऊ। इह संस्कार-योनि आहार्या-रूपले प्रत्येकमा छिटो-छिटो पाइला चाल।

तिम्रो हार्दिक नेदिष्ठ रूपले हामीहरूलाई बिदग्धवादको टोली बनाएर तिम्रो पूजा गर्ने अवसर देऊ। हामी विदग्ध हृदयमा अवकेशी भएर तिम्रो कोरो पूजा गर्न खुशी-राजी छैनौं। शान्ति! ए ऽऽऽ शान्ति? उकुस—मुकुसाएको दन्-दन् बलिरहेको अन्तःकरणको आवेगमा तिमीतर्फ एकादममा हुत्तिने नगराऊ। स्वयं तिमीनै आऊ। तिम्रो लागि गल्लि-गल्लिमा प्रत्येक सड़कका प्रत्येक छेउँ कुनामा कुहेर कैयौंले तपस्या गरिराखेकाछन्। रात-दिन नबिसाएर रोइरहेछन्। कैयौं दन्-दन् बलेको आगोमा तिम्रो लागि होमिरहेछन्। कैयौं तिम्रो लागि गेड़िइरहेछन्। हाम्रो प्रतिक्षणिक स्वागत औ निमन्त्रण छ। टाढा-टाढा नभाग। तिम्रो अस्तित्वमा नै हामीहरू छौं। तिमी खलबलिए हामी पनि खलबलिने छौं, हाम्रो आत्मातक खलबलाउनेछ। तिम्रो, हाम्रो सामञ्जस्यमा तिमी औ हामी देख्नसक्नेछौं फूल-पानाको हृदय भएको दुनियाँ औ संसार!

अर्घा, गुल्मी



# जीवन

—विष्णुभक्त 'धनंजय'
हे० मा० ज० ज्यो० हा० स्कू० त्रिवेणीपुर
( चुत्रा वेसी ) गुल्मी

जीवनका उन्मादले मिचिछएर पनि अन्तिम अवस्थामा पुगेको मानव-शरीर युवावस्थाको तातो श्वासको अनुभूति चाहन्छ । ऊ चाहन्छ वक्षको चूर्ण हाडमाथि रमणीको उष्ण श्वासोच्छ्वासको वेग तथा धुकधुकी । चाहन्छ यौवन-भारले उच्छृङ्खल वामाका चञ्चल-नेत्र एवं रक्तिम अधर-रसको पान, तर आफ्ना पाइला जुन मृत्युको सँगारका शायद पारि पुगिसकेका छन् वास्ता गर्दैन । यही त आजको वृद्ध जीवन हो । यसैमा ऊ सुखको अनुभव गर्छ ।

युवक आफ्नो जमानीको मदमा त्रस्त संसारलाई भुलाए जस्तै आफ्नो एकान्त-प्रेम विरह सहन्छ । उसलाई वास्तै छैन । संसारले के भन्छ ? रमणीको उन्नत-उरोज अलिकति के देख्यो वैलाई हाल्छ, बिर्सिहाल्छ, सबै-थोक । परवाह छैन उसलाई संसार कता छ, किन ? उसलाई आफ्ना सुस्केराले, स्वर्गीय-कल्पनाले ऐन्द्रिय सुख भोगले फुरसतै कहाँ छ र ! यसमै ऊ मग्न छ । तृप्त छ । यही उसको चरम सुख हो ।

(बाँकी पृष्ठ १५ मा)

# यस रातलाई सोरेर मुछिदिएँ मैले तिम्रो केशमा

—वासु शशी

यस रातलाई सोरेर मुछिदिएँ—मैले तिम्रो केशमा
र एउटा यस्तो क्षण उत्पन्न भयो
जब तिमी तिमी रहिनौ, म म रहिन
ती म र तिमीको एउटा हामी बन्यो
हामी अर्थात् एउटा आयु जिन्दगीको तेलकासामा
हामी अर्थात् एउटा बिहान पर्वत र आकाशका बीचमा

साउनले एकवर्षा पानी जस्तै
मैले अलिकति आफू तिमीलाई दिएँ
तिमी एउटा नदी बनेर देखापऱ्यो
एउटा रातो नदी
र तिम्रो सिउँदमा र मेरो नसामा बग्यौ
मैले बिस्तारै गीतहरू बन्द गरें
र तिमीलाई सुनें—
तिमी मेरो छातीमा वज्यौ
मैले तिमीलाई हेरें
र सपनाहरू देख्न छाड़िदिएँ
ताराहरूको चाँदनी मैले ताराहरूलाई नै फर्काइदिएँ
फूलहरूलाई मैले तिम्रो गाला हैनन् भनिदिएँ,
मैले वसन्तलाई अब मेरो कोठामा ठाउँ छैन भनिदिएँ

तिमी एउटा साथ र अभिभूत भयौ
सिङ्गै ममा
तिमी, सिरसिरे हावा एउटा रूखमा
तिम्रो साथ, एउटा रूप एक चौटा बादलमा
म तिम्रो ओठमा देखापरें
मैले आफ्नो उपस्थितिलाई तिमीमा भेट्टाएँ
मैले तिमीलाई पाएँ
र लौ, यो सारा संसारका प्रति ख्याल लगाइदिएँ



---

(पृष्ठ १३ को बाँकी)

बालक ऊ त अबोध। आफ्नै क्रीड़ामा भुलेको छ। संसारको दुःख पीड़ा चिन्ताहरूबाट कहाँ हो कहाँ टाढा सुख-कल्पनाको पनि अज्ञानी आफ्नो बाल-दलको साथ कतै सर्प समात्नमा त कतै माटाले नै तृप्तहुँदै कल्लोल गरि-रहन्छ मात्र। कहिले आमाको संझनाले मुटु कोट्याउँछ नत्र उसलाई कसैको चिन्ता वास्ता छैन। आफ्नै क्रीडाको मनोराज्यमा सब चीज बिर्सेको हुन्छ। यही त हो परमानन्द।

तृष्णा भोग एवं क्रीडानै शायद जीवन हो।



## बाधा

—श्रीमती सावित्री सुन्दास

झक झकाइदिन्छ कसले
बार बार नयन द्वार
आई कसले तोड़िदिन्छ
स्वप्नको मोहक संसार।

स्वप्निल जगमा तारासंग
खेल्दा चन्द्रकिरणमा लुकी
मन्द गतिले आएको
दिन्छ सदा रोकी।

सुरभी सुगन्ध लिई पन
कुत कुताइदिन्छ अंग
मुस्कान अधरमा जाउन अगि
गरिदिन्छ कसले बन्द।

स्वप्न सागरको शान्त जलमा
नील कमलले डाक्दा
दुई करूण नयन आई
रोकिदिन्छ मलाई सदा।

चंचल मीन हात समाती
भन्छ आऊ गरौं क्रीड़ा
पीत पात झैं करुण नयनमा
देख्छु अनन्त पीड़ा।



# सुहाग-रातमा घटना

—राजकुमार दास कक्षपति एम. ए.

विवाहको दिन घरमा सज-धज गरेका सबै नर-नारीहरू ऊभन्दा अर्को राम्रो हुने प्रयासमा मुग्ध थिए । पंचवाजाको प्रतिध्वनिले त्यस लग्नका सबै व्यक्ति लट्ठ परेका थिए, जस्तै कि बीनको मधूर स्वरले नाग लट्ठ पर्दछ । तिनी नर-नारीको कतार कहिले यता कहिले उता उछल-पुछल गरेको दृश्य पनि त्यो शुभ लग्नमा कम शोभायमान् थिएन ।

बरातको साथ आएका नव दुलहा-दुलहीको स्वागत विधिपूर्वक भयो । कसैले दुलहा सुहाउंदी दुलही भयिन, कसैले दुलही सुहाउँदो दुलहा भएन भनी कुरा काटन चुकेनन् । जेसुकै भए पनि दुलहा-दुलही बी. ए. पास भएका थिए । एक अर्काको अनुकूल होवैन भनी कसैले कल्पना गर्न सक्दैन-थिए, किन कि प्रेम भएर विवाह भएको सबै जान्द थे । दुलही भित्र्याएपछि सबै खान-पिनमा चुर्लुम्ब डुब्न लागे । शोभा बढाउन आएका निम्तारूहरू सबै संतुष्ट थिए । सूर्य जब जब ओलझाउन लागे तब तब रजनी आफ्नो यौवनलाई लिएर सुस्त सुस्त निक्लन लागिन् । एस्तो लाग्दथियो कि रजनीले तिनी नव-दम्पत्तिहरूलाई सूचना गर्न आईरहेकी छन् कि तिमीहरूको आज सुहाग-रात हो । हाँसो गर ! जीवनमा खुशी हुने रात आजमात्र छ । तिमी-हरूको जीवनमा यस्तो खुशी हुने सुनौला मौका न पहिले आएको थियो नत भविष्यमा संभव छ···आदि आकाशवाणी दुवै नव-दम्पत्तिको कानमा पुगी-सकेको थियो र जति जति रजनीको वैस ( यौवन ) चढदै थियो त्यति त्यति उनिहरूको हृदयको धड़कन पनि बढदै गइरहेको थियो ।

सहेलीहरूको छेड-छाड सुनेर दुलहीले कल्पना गर्दथिन् कि आज सूर्य न-अस्ताए पनि हुने थियो, तर प्रकृतिको नियम अकाट्य छ, जो हुनु छ भएर नै छोड्दछ, चाहे त्यसको विरूद्ध जे सुकै कल्पना गरुन् । आखिर साँझ परेर नै छाड्यो । साँझको खान-पिन पछि सबै पाहुना र घरका परिवार आफ्नो आफ्नो ओछ्यान तताउन लागे । वातावरण सूनसान भयो ।

दुइ-चारजना बचेका दुलहीका हृदयी साथीहरूले दुलहाको कोठामा पसाउन पूर्णरूपले प्रयत्न गरे सकभर दुलहीले पनि त्यस जेलखानमा जान न-परोस् भनी हजार कोसिस गरिन्, तर असफल रहिन् । अन्तमा सहेलीहरूले दुलहीलाई करैसंग कोठाभित्र पसाली वाहिरवाट ढोका थुनिदिए । दुलहा बाबू पनि यो दशा देखेर भुतुक्क लजाई खाटमाथि सुती भित्तापट्टि हेरेर किताबको पन्ना उलटाई-पलटाई रहेका थिए । दुलही पनि कोठाको एउटा कुनामा वसिरहेकी थिइन् ।

उनको ( दुलही ) वोलने चलने शक्ति सब उडिसकेको थियो । हिडन पनि नसक्ने भइसकेकी थिइन् । पत्थरको मूर्ति ल्याएर बसाले जस्तै उनी चूप-चाप बसेकी थिइन् ।

धेरै रात वितिसक्यो । उनिहरूको बोलचाल हुन सकेन । यता दुलहालाई भने आफ्ना साथीहरूले भनेको याद आयो कि सुहाग-रातमा आफ्नो दुलहीसंग केहिकुरा माग्न पर्दछ । केहि मागेको कुरा पनि दिनु पर्दछ, तर यो कसरि । जबकि एक शब्द वोल्न पनि मुस्किल भइरहेको छ । दुलहीको त्यो स्थिति देखेर दुलहाको पनि वोलाउने साहस आएन र मनमनै सुत्नपर्‍यो भनी लाख प्रयत्न गरे दुलही देवीको अगाडि निद्रा देवीको दाल गलेन । उनी धेरै वेरसम्म छटपटाइरहे । यसरी दुलहा छटपटाइरहेको देखेर दुलहीले मनमनै भन्न लागिन् कि विचरा तिनी पनि यस बेलासम्म निंदाउँन सकेनन् म पनि पत्थरको मुर्ति जस्तै बसिरहेकी छु । व्यर्थ मलाई यस कोठामा हुल्याइदिए भनी आफ्ना सहेलीहरूलाई मन-मनै गाली गर्न लागिन् । उनको हृद-

यमा पनि यस्तो भावना उत्पन्न हुन लाग्यो कि बोलाए त बोल्ने थिएँ आदि……।

पुरुषको जात नकच्चरो हुन्छ भन्ने सबैलाई थाहै छ। यस बीचमा दुलहाले नै पहिले आफ्नो वचन छाडे। हुन त पहिले नै देखि बोल्ने इच्छा

## सपनीको सुखको अनुभव

—सुश्री वाणीरागिरि

म सपनी देख्छु एक सुन्दर अनुपम
तिमी मेरो नगीच हुन्छौ
छुन सक्छु म तिमीलाई
हामीलाई अघि पट्टिका अरूका हाँगामा फूलिरहेका
गुलाफी फूलले हेर्छन्
हजारौं आँखाले जस्तै
ती हेर्न नसकेर मेरा यी आँखा थाक्तछन्
अनि जब म हेरिदिन्छु तिमीलाई
छोपिदिन्छौ मेरा नेत्र
तर सुख छैन यी आँखा छोपिन्दा पनि
किनकि अझ भारी सुखले
मुटु नै मेरो थर्किन्छ।

दार्जीलिङ्

गरेका थिए, तर वीच-वीचमा कसैले घाँटि अठ्याइदिए जस्तै गलादेखि माथि शब्द निस्कन सक्दैन थियो । अन्तमा

दुलहा —'रात धेरै वितिसक्यो सुते पनि हुने थियो ।'

दुलही—'हवस हजुर पनि सुत्नुस् !'

दुलहीको मुखवाट स्नेह भरेको मधुर स्वर सुनेर दुलहा दङ्ग परेर अरू पनि अनेक कुराको आशा राख्दै भने :—

'न जाने आज मलाई निद्रा किन लागेको छैन । यो मेरो कोटा हो तर मलाई आज आफ्नो जस्तो लागेको छैन । एउटा नचिनेको ठाउँमा गएर वस्दा राम्रो लागे जस्तो तथा सूनो लागे जस्तो हुन्छ त्यस्तै आजको रात मलाई लागिरहेको छ ।'

दुलही—मुसुक्क हाँस्दै 'सायद म वसेकी भएर तपाईलाई त्यस्तो लाग्यो होला अथवा निद्रामा वाधा हुन गयो । यदि आज्ञा भए म वाहिर कुनै अर्कै कोठामा सुत्न जानेथिएँ ।'

दुलहा—'वाहिर जानुभन्दा वरु अलिकति मेरै अगाडि वस्न आए सायद मलाई निद्रा लाग्ने थियो । फेरि अर्को कुरा सुहाग-रातमा केहि कुरा दुलहा-दुलहीले लेन-देन गर्नुपर्दछ, अथवा लिनु दिनु पर्दछ भन्ने हाम्रो नीति परम्पराको रीति समाजले मान्दै आएको छ । फेरि तिमी म समान पढ़े गुनेकी छौ मैले संझाउन पर्ने केहि छैन । यदि तिमी पनि चाहन्छ्यौ भने मेरै अगाडि आएर वस म तिमीसंग आज सुहाग-रातमा केवल एकै माग्दछु ।'

दुलहीलाई हिचकिचाहट लाग्नु स्वभाविकै हो तर उनी पढ़े-लेखेकी आफ्नो पतिको आज्ञा कुनै पनि स्थितिमा उल्लंघन गर्नु हुँदैन भन्ने ज्ञान भएको हुनाले दुलहा सुतेको खाटको ओछ्यानमा नजदीकै वसिन् र मधुर स्वरले भनिन्—'आज्ञा होस् ? जो हजुरले माग्नु हुन्छ त्यो दिन तयार छु ।'

यो शब्द सुनेर दुलहा अत्यन्त खुशी भएर सोच्न लागे कि यस्तो सुनौला मौकामा मैले अरू थोक ( वस्तु ) मागेमा उचित होला किनकि आज सुहाग-रात पनि हो भन्ने निश्चय गरेर भने—'म केवल त्यही चाहन्छु ।'

दुलही—'विनानामको त्यही म जान्न सक्दिन। कृपया त्यसको नाम वताउनु होस्।'

दुलहा—(हिच किचाउँदै) 'प्रेम' तिमीसंग आजको सुहाग-रातमा यहि माग्दछु कि मलाई पूर्णरूपले माया गर अथवा प्रेम देऊ।'

दुलही—'हुन्छ भन्नुभन्दा अगाडि तपाईले एक दुई प्रश्न गर्ने अनुमति दिनु हुन्छ ?'

दुलहा—'मज्जासंग, तिमी आफ्नो चाहलाई व्यक्त गर्न स्वतन्त्र छौ। तिम्रो माग पूर्तिगर्न म हर तरहवाट तैयार छु।'

दुलही—'प्रेम गरिदैन अथवा दिइदैन। त्योत एक अर्कोलाई देख्दछन् र एकाएक उनीहरू अर्कोलाई चाहन्छन् तव प्रेमको सिकार बन्दछन् भनि आधुनिक वैज्ञानिकहरूको एक मुख छ अथवा यसो भनौं कि यही प्रेम-को परिभाषा छ। होइन ?'

दुलहा :—(हाँस्दै लुरुक्क परेको स्वरमा) 'वाह ! वाह !! यसको जवाफ छैन यदि तिमीलाई दुःख नलाग्ने भए मैले कर्कै अरू कुराहरू पनि सोधने थिएँ।'

दुलही—दुलहालाई कुरावाट हराएको हुनाले अर्को कुरामा पनि हराउने आशाले भनिन्—'हवस् ? हजुरले मलाई जति स्वतन्त्रता प्रदान गर्नुभयो त्यसको लाख गुना अधिक मवाट पनि स्वतन्त्रता लिनुस् र साथ साथै अधिकार सौंपि दिन्छु।'

दुलहाले खुशी हुँदै भने—'तिम्रो आफ्नो जीवनमा कसैसंग प्रेम भएको छ ? जस्तै तिम्रो प्रेमको परिभाषा अनुसार।'

दुलही—(मुस्कुराउँदै) 'अँहः !!'

दुलहा—'आज सुहाग-रात छ। मेरो कसम छ। यदि कोहीसंग भए पनि निःसंकोच वताउ।'

दुलहीलाई ठूलो संकट आईलाग्यो तातो दूध थुक्नु कि निल्नु भयो। धेरै बेरसम्म चुप लागिन्, अन्तमा वताउने निश्चय गरिन् र एक शर्त

राखिन्—'यदि तपाईं नरिसाउने भए म स्पष्ट बताउँछु।' दुलहा—'हुन्छ सत्य कुरा बताइदियौ भने म रिसाउने छैन।'

दुलही—'म ठीक नौ साल समाप्त गरी दशमा टेक्न लागेकी थिएँ। मेरो जन्म दिनको उत्सवमा मेरा माता-पिताजीका सबै इष्ट-मित्रहरूलाई निम्ताएका थिए। सबै साना ठूला मेरा साथी संगिनीहरू पनि उपस्थित थिए। म राम्रा लुगाले सिगारिएकी थिएँ। आएका सबै निम्तारूहरूले एउटा-एउटा कोसेली-हरू लिएर आई मलाई टिका लगाई त्यो ल्याएको चीज बीज ( उपहार ) हरू मध्ये खेलौना लुगा दिएर जान्थे।

मेरो पिताजीका घनिष्ट मित्र ठूला सेठ थिए। उनी पनि त्यस्तै प्रकारसंग मलाई दिनकै निमित्त मेरो नाम 'मयालु' लेखाई एउटा शृंगार-दान ल्याएका थिए। त्यो बाकस उस बेला आफ्नो छोराको हातबाट खोसेर दिए तर उनको छोरालाई त्यो शृंगार-दान मलाई दिएको पटक्कै मन परेन। एक त सेठका छोरा त्यसमा पनि अति पुलपुल्याइराखेको हुनाले उनकै विजय भयो। उनी मेरो अगाडि आई भने—'त्यो मेरो शृंगार-दानको बाकस देऊ' माया लाग्दो मुख थियो म बोलेकी थिइन। आमाले भन्नु भयो कि तिम्रा यतिका खेलौना छन् देऊ, फेरि तिमलाई अर्को किनेर दिउँला। मैले त्यो बाकस दिएँ। मलाई उस बेला यस्तो लाग्यो कि अरू पनि खेलौना मागेको भए दिने थिएँ, तर लोभीले आफ्नो मात्र लिएर गए। तिनी लोभी भए पनि मलाई तिनको प्रति स्नेह उत्पन्न भयो। माया लाग्यो, यहि मेरो जीवनमा घटेको पहिलो माया हो।'

दुलहा—इर्ष्याले आगो भए पनि बनावटी हाँसो हाँस्दै भने—'यो त बालककालको कुरा होला त्यस पछि पनि त अरू घटना घट्न सक्छन्।'

दुलही—'अवश्य यो पनि सब म बताउँदै छु। हाम्रो बेला-बेलामा भेट हुँदथ्यो। उनी पनि पढन जान्थे र म पनि। जब छुट्टि हुन्थ्यो हामी घरमा आउँथ्यौं। प्रायः, गरेर घरमा हाम्रो भेट हुने गर्दथ्यो। यो भेट हुनु मेरो प्रेमको आँकुरामा मल-पानी राखे जस्तो हुन्थ्यो। मेरो हृदयमा उनको चाहको

मात्रा जति पल्ट भेट भयो उति अधिक बढ्दै जाने गर्दथ्यो । म प्यासी थिएँ उनी पानी थिए उनको दर्शन नै मेरो तिर्खा मेटिने साधन थियो, म उनलाई जीवन-साथी बनाउन चाहन्थें । म सधैं उनकै छेऊ तथा आसपासमा बस्न पाऊँ भनी कल्पना गरी बस्दथिएँ ।'

जति जति दुलहीका कुराहरू सुन्दै जान्थ्ये त्यति त्यति दुलहाको

## प्यारो देश

—फणीन्द्रनाथ ज्ञवाली

नेपाल हाम्रो बहुतै रसीलो,
संसारमा एक छ यो खँदीलो ।
यस्मा छ चोखो महिमा विचित्र,
झर्नाहरूको कण-भिन्न-भिन्न ।।

नदीहरू कल्कल गान गर्छन्,
त्यस्मा यी झर्नाहरू ताल भर्छन् ।
मौरीहरू गुन्गुन रागदिन्छन्,
चरी रसीला कविता सुसेल्छन् ।।

यो विश्वमा सुन्दर एक देश,
टोपी र भोटो छ यहाँ सुवेश ।
अगाडिमा उज्ज्वल छन्हिमाल,
यो भूमिको याद कतै नफाल ।।

गुल्मी थोर्गा

मुखमा अँधेरो वादल छाउदै आउँथ्यो रिसले आफूलाई वल्ल-तल्ल समालेका थिए! अझै पनि यसभन्दा बढ़ता गुह्य कुराहरू पत्ता लगाउने उनको अभिलापा वढदै गएको थियो। एक त कुरा सुन्ने उत्सुकता अर्को कुरा सुनेर वेचैन। दुलहाले निश्चय पनि गरि सकेका थिए कि भोलि विहान नै तलाक दिने वन्दवस्त गर्नु पर्‍या भनी, तै पनि अरू कुराहरू पत्ता लगाउने इच्छा थियो र भने—'अरू शेष पनि वताऊ कुन प्रकारले भयो। तव मात्र म तिमीलाई धन्य र महान्‌को पदवी दिने छु।'

दुलही—'आशामात्र होइन मलाई विश्वास पनि छ कि मैले धन्यको अवश्य पदवी पाउनेछु। सुन्नुहोस् शेष यस प्रकारको छ—उनिलाई र मलाई बी. ए. को डिग्री एकै सालमा प्राप्त भयो। मेरा माता-पितासंग उनका माता-पिता माग्न आए। विवाहको दिन निश्चित गर्नुभन्दा पहिले आधुनिक पद्धितिको अनुसार कन्याले वर हेर्ने र वरले कन्या हेरेर मात्र विवाहको निश्चय हुने भनां हाम्रो उपर छाडिदिए। मलाई हेर्न उनी ( केटा ) हाम्रो पिताजीको वैठकमा आएका थिए। मैले उनलाई हजारौं पटक देखीसकेकी थिएँ र तिनीले पनि। तै पनि त्यस दिन मलाई पनि अरू बढ़ता हेर्ने इच्छा उत्पन्न भयो। मैले सोंचेकी थिएँ कि यस बेला वैठकमा जाने अवसर पाए खूवसंग उल्टाई-पल्टाई हेर्ने थिएँ। भाग्यवश आमाबाबुको पनि हेर्ने हेराउने वहानाले वैठकमा चाय लैजाने काम सौंपनु भयो। मैले नयाँ ब्लाउज र साडी चट्ट फेरेर राम्रैसंग हेर्छु भनी साहस गरेर चाय लिएर गएँ। मैले चाय टेबुल माथि राखेर नमस्ते गरें नमस्तेको उत्तर के आयो मैले बुझ्न सकिन। मलाई यस्तो लाग्यो कि कहिले त्यहाँबाट वाहिर निस्कुं; जस्तै आज यहाँ भैरहेछ, उनलाई हेर्न गएको त हेराउन गए जस्तो भएँ।

सबैले चाय पिइसके पछि म कप प्लेट उठाउँदै थिएँ। उनको चायको कप भने उनको हातैमा थियो। उनले कप लिन इसारा गरे म अगाडि बढ़ी त्यो खाली कप लिन लागें उनले कप दिनुको साथ-साथै मेरो कान्छी औंलामा

चिउँटी दिए ( चुटि काटे ) मलाई कस्तो ! कस्तो ! लाग्यो त्यहाँबाट कप लिएर पुच्छर पड़काएँ ।'

दुलहा--'त्यो को थियो ।'

दुलही--'यतिका बताई दिएर···पनि ।

दुलहा हूँ मेरै कहानी मलाई नै सुनाइरहेकी छौ । यो सब तिमीलाई कति याद रहेको ? मैले अरू सबै बिर्सीसकें, तर चिउँटी काटदा···तिमी भागेको त मलाई भर्खर जस्तै लाग्छ । हेर ! दराज ( आलमारी ) मा त्यो मैले खोसेर ल्याएको शृंगार-दान पनि मौजूद छ । अब त मैले माग्ने छैन तिमी ली लेऊ'

दुलहा पुराना कुरा सुनेर धेरै बेरसम्म छक्क परेर टोलाउँदै कुरा यता-उता लैजाने बहाना-झिक्दै फेरि भन्न लागे--'के त्यति सानो उमेरमा मेरो उपर तिम्रो प्रेम थियो ?'

दुलही--'के साना सानी बालकबालिकाहरूको प्रेम हुँदैन ?'

दुलहा--'तिम्रा प्रश्न को जवाफै छैन म हारें तिम्रो विजय ।'

दुवै सपत्नी हाँस्दै कुरा बन्द गरे । धेरै बेरसम्म दुवै चूप रहे । उनी दुवैको मन मनैमा लाग्द थियो कि कुनै वाद-विवाद प्रारम्भ भए हुने थियो साथै-साथ दुलहीले भनिन्--

'यदि तपाईंलाई बताउन असजिलो नभए म पनि यौटा प्रश्न राख्ने थिएँ जो त्यो हो तपाईंसंग पनि त कसैसंग अवश्य घटना घट्न सक्दछ के बताउन सक्नु हुन्छ ?'

दुलहा--'लौ हुन्छ, म पनि बताइदिन्छु म अध्ययनको लागि विदेश गएँ । वहाँ यौटा सेठकी छोरी थिइन् । एकाएक हाम्रो चार आँखा भयो । हामीलाई एक अर्काको चाहना भयो हाम्रो घनिष्ठता यति बढदै गयो कि हामी एक अर्कोविना रात-१० घंटा विताउन पनि असमर्थ रहन्थेऊँ । उनी मसंग विवाह गर्न चाहन्थिन् । म अगाडि त विवाह गर्न तैयार थिएँ, तर गर्दा गर्दै मेरो विचारमा क्रान्ति फैलियो । मैले उनलाई छाडिदिने प्रयत्न

गरें। उनी मेरो यो भाव देखेर साह्रै आकुल-व्याकुल भइन्। दिनमा भोक र प्यासको ठर-ठेगाना रहेन।'

दुलही—'तपाईंहरूको स्नेह कति पवित्र थियो अथवा कुन दृष्टिकोण-बाट एक अर्कोसंग संबन्ध थियो ?'

दुलहा—'केवल सिन्दूर लगाउन सिवाय अरू कुनै कुरा शेष रहेको थिएन। त्यसै भएर नै तिनीले मलाई छाड्न नसकेकी हुन्। एक दिन साह्रै पछि लागेकी हुनाले साफ भनिदिएँ कि आजदेखि तिमीले मबाट कुनै कुराको आशा नगर। मसंग कुनै संबन्ध छैन। तिमी आफ्नो माता-पिताको इज्जत चाहन्छेउ भने चूप-चापसंग बस्नु। यो मेरो कट्टर शब्दले उनको हृदयमा ठूलो चोट लागेछ। उनी बौलाईकन अन्तमा प्राण त्यागिदिइन्। सुन्दछु कि मर्ने वेलामा पनि मेरो नाम जप्दै राजन् ! मेरो राजन् !! भन्दै थिइन् रे···आदि।

दुलही—'तपाईं हो मेरी दिदी रूपाको जीवन नष्ट गराइदिने। रूपा मेरी मामाकी छोरी दिदी हुन्। तैले रूपालाई आफ्नो चंगुलमा फसाएर मसंग पनि प्रेमको ढोंग रचेर मेरो आँखामा धूलो छर्रि दिइस्। रूपा तेरो लागि नै बौलाएर मरेकी रहिछन्। मसंग छुपाएर मेरो जीवनसंग खेल्न खोजी राखेको रहेछ। (दाह्रा किटेदै) पापी ! पुरुषको जात एक अबला केटीको हात समातेर फ्याक्न सक्ने। एक कमजोर आत्मालाई लुटेर लात मारिदिने, एउटा फुल्न लागेको कोपिलालाई टिपेर नष्ट गराइदिने पापी !···आदि कराउँदै आफ्नो वेगबाट हीराको औंठी निकाली मुखमा राखिन्।'

भित्रको आवाज जो कि "पापी ! पुरुषको जात···" आदि शब्दहरू जोड़संग कराएको सुनेर सपरिवारहरू जर्फराउँदै उठे। साथै बरातमा आएका पाहुनाहरूको पनि कोठा बाहिर भीड़ लाग्यो। भित्रबाट आवाज—

दुलही—'पापी ! एउटा कमजोर केटी ऊपर यस्तो अत्याचार गर्छस्। केटीको जीवन परवाह इच्छाको भूखा तलाई लाज छैन ? समाजको ख्याल छैन ? के तलाई धर्मको डर ?

(बाँकी पृष्ठ ३६ मा)

# संझौता

—कुमार विसिङ्ग

आज फेरि म यो मंचमा–
एडबटाईज [ विज्ञापन ] बनिदिनु
उभिन आएको छु।
केवल तिम्रो निम्ति म यहाँ
सिनेमाको सस्तो पोस्टर जस्तो
उभिदिएको छु।

तिम्रा साथीहरूका छेउँमा तिमीलाई
ईनसल्ट पार्ने [ होच्याउन ] म यहाँ
उभिएको छु।
म यहाँ उभिएको छु, तिमीलाई–
'नर्वस' पारिदिन, तिम्रो ढुक-ढुक गरी चलीरहेको-
मुटुमा अझ तेज गति भरिदिन,
तर-आज तिमीले मलाई यहाँ देखेर
तिमी आफै अवाक भएकी म देखिरहेंछु,
किनभने-तिमीले म बिरामी परेको अवस्थामा-
आफ्नो मायाको चमत्कार देखाएर–
गइसकेकी थियौ।

मलाई बहुलापनको उपाधि दिएर तिमी-
'क्लिन' [ साफ ] भएकी थियौ।

म मरीसकेको पब्लिसिटी [ प्रचार ] गरिसकेकी थियौ,
यसै र—यहाँ मलाई देख्दा—
तिमी डराएकी जस्ती, तिम्रो होश, हराएको जस्तो—
म देखिरहेंछु ।

नर तिमी नडराऊ !
म तिम्रो 'पोल' खोलिदिनेछैन,
आज म यहाँ तिम्रो निम्ति—
अपरिचीत बनिदिन्छु तिमी पनि त्यस्तै बनिदेऊ !

म त केवल म बाँचेकै छु भनी तिमीलाई—
देखाउन मात्र यो मंचमा उभिन आएको छु,
तिमीलाई देख्दा मलाई नकसतो पनि लागेन
खोई म त अलिकती पनि 'नर्वस' बनिन
मेरो त अब तिम्रो प्रतिको 'एट्रेक्शन'
अब हराइसकेको छ ।

किनभने—धेरै-धेरै पल्ठ तिमीलाई-
अंगालोमा बाँधेर,
दिनमा, रातमा पनि जता तते घुमिसकेको छु ।

धेरै धेरै पल्ट तिमीसित वसेर सस्तो रेस्तुराँमा-
चिया पिइसकेको छु ।

त्यही टर्रो र खल्लो चियाको घुट्कीहरूसितै—
तिमीलाई मैले पिइसकेको छु ।

अब त मेरा इच्छा र आकांक्षाहरू
धमिलाइसकेको छ,

यहाँ त म तिमीलाई मेरो जिउँदो रूप-
देखाउन यो मंचमा उभिन आएको छु ।

अव त तिमी मेरो निम्ति मात्र होइन सबैका निम्ति–
फूलदानमा भरेको प्लास्टीकको सस्तो रंगीन
फूलहरू जस्तो मात्र भएकी छौ ।

सब्जीका बजारमा-ओइलिएर फ्याँकिएका सब्जीहरू जस्तो-
मात्र भएकी छौ ।

तिमीमाथि मेरो माया नभए पनि–
अघिको सम्वन्ध र सम्झना त छ,
[ अब फेरि ऊसित 'संझौता' गर्ने अभिप्राय ]
म सदा एकलै-एकलै चूपचाप घुमिदिन्छु,
कता-कता रंगाली हिड्छु,
तिमीलाई पनि एकलै-एकलै उदास-उदास
जता-ततै घुमिहिंड़ेको म देख्छु,
तिमीले पनि मलाई आँखा उठाएर हेरिदिन्छौ

म पनि तिमीलाई त्यसरीनै हेरिदिन्छु,
यही आँखाको मूक सम्बन्ध त अझसम्म हामी दुईको छ !
अब-संझौताको पहिलो शब्द तिम्रै सुरिलो कण्ठबाट-
निस्कन्छ कि भनी आश राखेको छु,
यसै र तिम्रै रूपमा सजिएर
आज यो मंचमा उभिएको छु ।

सुनदह दार्जीलिङ्



# कूटस्थ

आचार्य रत्न
—डा० श्री गोविन्द कविराज
प्रो० वा० सं० वि० वि० वाराणसी

न छोरो छ मेरो न छोरी छ मेरी।
पियारी नता मित्र छन् वा मितेरी।।
मता झल्झलाकार मस्ती उही सत्।
चिदानन्दरूपी शिवै हूँ शिवै हूँ।।

न दाजू न भाई न बैनी छ मेरी।
दिदी छन् न ता ज्वाइँ भाञ्जा र भाञ्जी।। मता०।।

भिनाजू न ता छन् न ता छन् पुसाजू।
न ता भानदाजू फुफू वा फुपाजू।। मता०।।

न ता छन् पिता औ न बाजे बराजू।
जिजू छन् न आमा ससूरा न सासू।। मता०।।

न जेठान शाला न शालीहरू छन्।
न जेठान्दिदी छन् न बैनीहरू छन्।। मता०।।

न मामा-ससूरा र सासूहरू छन्।
भदा वा भदै वा बुहारी नता छन्।। मता०।।

न छन् कोहि मामा न ता माइजू छन्।
न ज्यामा बुढ़ीयाँ अरू नै कुनै छन्।। मता०।।

न छन् कोहि मेरा सँगीमा हजूर्मा ।
नता छन् ठुलावा नता छन् ठुलीमा ।। मता० ।।

न छन् मीतभाई न ता मीतदाजू ।
न ता साडुभाई न ता साडुदाजू ।। मता० ।।

नता सानिमा सानवा वा बड़ीमा ।
कुनै छैन अज्ञान नै हो सबैमा ।। मता० ।।

न ता साथ ल्याएँ न लानूछ केही ।
भएथे न साथी हुनेछन् न कोही ।। मता० ।।

न ता घोर तापत्रयाक्रान्त नै छु ।
न लेना न देना मगन्मस्तमा छु ।। मता० ।।

न गाई न गोरू न भैंसी न राँगो ।
न भेड़ो न भेड़ी न बोको न वाखो ।। मता० ।।

न खेती न पाती बगैंचा वनै छन् ।
न जग्गा जमिन् छन् नता ती नहर् छन् ।। मता० ।।

न छन् भव्य दर्वार शय्यासनादि ।
न ता टेक्स कोई कतै तिर्छु काँही ।। मता० ।।

न हीरा न मोती न पन्ना मुगा छन् ।
न माणिक्य नीलं न गोमेदनैछन् ।। मता० ।।

न वैडुर्य मेरा न ता पुष्पराग ।
न हात्ती न घोडा न पाल्की जहाज ।। मता० ।।

( क्रमशः )



# मैले विद्या सिकें

—दिवाकर शर्मा व्याकरणाचार्य, बी. ए.
—हे. मा. रिड़ी हा. स्कू. गुल्मी

संसारमा धन कमाउने बाटा धेरै छन्, कसैले पढेपछि पढाएर, कसैले अर्काका भाँड़ा माझेर, कसैले खेती किसानी गरेर, कसैले भाँड़ा वर्तन बनाएर रुपियाँ कमाउँछन्, केवल यत्ति मात्र होइन अरू बाटा पनि छन्, तर हे नानी! यदि तैंले अर्का जन्मको कुरो मान्दैनस्, अर्का—जन्ममा दुःख भोग्न पर्ला भन्ने तेराभन्मा छैन, भने बाबू ! चाड़ै धन कमाउने बाटो फटहागिरि छ। जा आमिले चौरका पुराना मुखियासित फटाहागिरि सिक् र बल्ल चाँडैं धनकमाउँन सक्छस् भनि यौटा कुमालले आफ्ना छोरालाई व्यङ्गात्मक अर्ति दियो।

पेमे कुमाल आफ्ना वर्गको आदर्श व्यक्ति थियो, उसले कहीं कसैलाई ठगेर लुटेर खाला भन्न पर्दैनथ्यो। एक दिन आफ्नो छोरो काले कुमालले ? रुपियाँ-को हाँडी २ रुपियाँमा बेचेर पौख गरें भन्दै बाबुलाई २ रुपियाँ दिएको त मारे व्यंङ्गात्मक गाली पायो। कालेले बाउको गाली संभेन, उलेवास्तविक अर्ति संझ्यो छोटा वुद्धिले प्रायः धोका खाये जस्तो देखिन्छ। काले पुराना मुखिया कहाँ फटाहागिरी सिक्न भनी गयो।

अचेलका युगमा ट्यूशनबिनाको के काम हुने र कालेले मुखियाका सामुन्ने आफ्नो भाव सबै बतायो, मुखियाले भने 'ए काले !' तैंले त मलाई फटाहा पो संझिछस्, देख अब त लाई बाँधी अड्डामा नपुरयाएर नभएको कुरोगर्ने बद-मास्' काले डरायो र भन्यो 'महाराज ! क्षमा पाम् म बाले पठाएर आएको

हुम् अब मैले कहीं पनि यस्ता कुरा गर्ने छैन।' मुखियाले भने हुन्न हुन्न, तेरो के पत्यारो, तँ जान पाउँदैनस् आज तलाई अड्डामा नपुरयाई छोड्दिन' काले आत्तियो र भन्यो 'महाराज! मलाई माफ गर्दिनोस् अबदेखि मैले यस्तो कुरा-गर्ने छैन, यी दश रुप्पे लिनोस्' खुसुक्क दिन खोज्यो मुखियाले खोजे कै त्यै थियो त्यो लिए अनि फेरी के मन्मा आयो कुन्नि भने 'काले! तेरा बाउले पठाएको रहेछ मैले तेरा बालाई फाल्न सक्दिन, फटाहागिरी मैले सिकाइ-दिनेछु। पैल्ये मलाई ३०० रु० फीस चाहिन्छ।' कालेले विचार्‌यो 'भला ज्यान त बच्यो, कस्सो अड्डामा नपुरयाएका, अब फटहागिरी पनि सिकाए त बेसै भयो र भन्यो, 'महाराज! माटाको काम गर्ने मान्छेका पासमा ३०० रुपया कहाँबाट आऊँछन् गरिबप्रवर रुपया म गरिबले कहाँबाट दिन सक्छु, माटाका रु० भने दिदो हूं पनि।' मुखियाले भने 'जा जा, मैले यस्तो विद्या सिक्नथाले-कोछु भन्ने हल्ला नगरेस्, रुपया माटा कै सही ३०० सये नभै त मैले सिकाऊँ-दिन, मेरो यो नियम छ।' कालेले भन्यो 'माटाका त ३०० भनेमा ४०० पनि दिन सक्छु' मुखिया,—'भो-भो परेन मेरो ३०० सये लिने चलन छ।'

कालेलाई अपूर्व विद्या सिक्न पाउने भएँ भन्ने कुराको जाद्रै हर्ष लाग्यो १० दश रुपये दिएको कुरात उसले कहीं पनि गरेन, किनकि त्यसले विचारेको थियो कि यो कुरा गरेको मुखियाले थाहा पाए भने मेरो दोहलो काढ्ने छन्।

वर्षामास थियो भट्टीमा पानी परिराख्ने, माटाका रुपियाँ बनाउन कालेलाई अनुकूल परेको थिएन। एक दिन मुखिया कुमाल-गाँऊको बाटो घर जाँदै थिए, बाटामा काले भेटियो, भने, 'खोई काले रुपयेल्याउँछु भनेको?' काले, 'महा-राज! वर्षामास भट्टीमा आगो बोल्दैन माटो त ठीक्क छ भरिसक् चाँड़ै गर्ने-छु। मुखिया लौ लौ चाडै ले, भन्दै आफ्ना घरको बाटो लागे।

कालेका मन्मा कैले माटाका रुपियाँ तैयार पारुला र त्यो विद्या सिकी पैसा कमाऊँला भन्ने छ। स्याखु भट्टीमा ओढाएर बल्ल बल्ल ५०।६० रुपियाँ तयार पारेको थियो कि झ्याँऊँ-झ्याँऊँ त पानी आउन थाल्यो, उस्को त्यो बस् चलेन छोड्यो। १५।२० दिनपछि मुखिया फेरि ३।४ जाना मानिससित घुम्दै

कुमाल-गाँऊमा आये । कालेलाई भट्टीमा आगो बाल्न लागेको देखेर 'भने, 'काले खोई तँले त बिर्सिस् क्यारे ।' बिर्सेको छैन महाराज ! पानीले उच्छार-पच्छार दिएन भरसक चाँडै ल्याउनेछु ।' मुखिया हिंड़े कालेसित के व्यवहार छर हो ?' मुखिया, 'अरू त केही पनि हैन अलिअस्ति ३०० रु० ल्याएको हो आज भोलि गर्दागर्दै दिन विताएको छ ।

भदौको मैना अब बित्यो असौजका घाममा कालेले ३०० रु० माटाका तैयार पाऱ्यो । लिएर जान तैयार परेको थियो कि उताबाट ४।५ जाना मानिस आएको देख्यो एकैछिनपछि उनी देखेका मानिस उहीं अगाडि पुगे मुखियानै रहे छन् । मुखियाले जिमुवाललाई र अचेलको मुखियालाई पनि लिएर आएका थिए । कुराकानी, बात-चीत त चल्यो, कालेले माटाका ३०० रु० टक्ऱ्यायो । सबै आश्चर्यमा परे पुराना मुखियाले भने, 'जि० भाई ! मलाई यस कालेका कामको अर्थ लागेन ।' जि०-'मलाई पनि, जि०-'ए काले ? तँले ३०० रु० मुखिया-का दिन छ ?' काले, 'दिन त छ हजुर टक्ऱ्याएँ पनि तर माटाका हुन्' पुराना मुखियाले भने, 'रे बदमास ! ल्याउँदा खेरी छन छनी गनेर ३०० रु० ल्याइस् अब माटाका तिरेर सुख पाइन्छ ? अस्ति पर्सी ल्याउँछु भनिस् छबिलालहरूले पनि सुनेका छन् हेर 'जि० भाई ! कस्ता जमाना आए १५।१० दिन पैले म छबिलालहरूसित यतै आएको थिएँ उसबेला पनि यसले भन्यो कि अब चाडै नै तयार पारेर दिन्छु । उनीहरुले पनि यो कुरा सुनेका छन् ।' नयाँ मुखियाले र जि० ले भने, 'ए बदमास् खाएपछि तिर्न पर्छ दिन्छस् भनि दे होइन भने ई अब भैंसी फुकाएर हिंडियो ।' काले अचम्म पऱ्यो, अलिवेरपछि यसो विचार गऱ्यो उसलाई मनमनै हाँसो पनि लाग्यो अनि भन्यो, 'मुख्ये मैले विद्यासिकें ।'



# मानव प्रति

—रुक्माङ्गद ज्ञवाली

सं० प्र० पाठशाला रिड़ी, गुल्मी

रे मानव ? अविरल गतिले हिंडिरहन्छस्
तर पनि स्वलक्ष्यमा पुग्दैनस् ।
जीवन छोटो कर्म छ खोटो समयमा जानै छ
अझ तेरो काम अधुरो छ ॥

क्षणमा हर्ष क्षणमा रोदन किन गर्छस् ?
विषय-विषका भोग रोगका फंदामा किन पर्छस्? ।
आशानिगडित तृष्णा ताडित व्यर्थमा किन मर्छस्?
जसलाई स्वकीय मानी ममता गर्छस् ॥

सर्वस्व मासी सेवा रतछस्
सदाचार छाडी कदाचार चाख्छस् ।
मृगतृष्णाको जलमा धाई
के पाइस हे मानव ? भाई ॥

नित नव सुखको खोजी गर्छस्
मादक विषयको बशमा पर्छस् ।
आखिर रूपान्तरमा पुग्छस्
तल तल अनितल झन तल झर्छस् ॥

भवभुमरिमा निशीदिन पुंग्छस्
मानव ! तैंले किन विर्सन्छस् ? ।
"कस्त्वं कोऽहंकुत आयात"
जानु छ कसरी कहाँबाट ॥

उद्भिज स्वेदज अण्डज रोगी
जरायुज योनिक्रमसंग भोगी।
पाइस् दु:खले मानव शान
नबना तैंले दानव जीवन॥

अन्तिम तेरो कोहो साथी ?
विवेक बलले जानु छ माथि।
तँमा रहेको उच्च विचार
यही हो तेरो मित्र उदार॥

जनसेवाको महाव्रत पालन
तनमन धनले गर स्थिर आसन।
पाइदैन यस्तो मानिस चोला
नर तन छुटेपछि पछुतो होला॥



---

( पृष्ठ २६ को बाँकी )

वाहिर भीडमध्ये कसैले ढोका खोलौं भन्थे कसैले पति-पत्निको मामलामा बाधा गर्न हुँदैन भन्दै थिए। त्यहाँ धेरैनै हल्ला भएको हुनाले खोल्नै पर्छ भनी ढोका खोली सबै एक साथ भित्र पसे। दुलहीको जिब्रो छोटिइसकेको थियो। केवल उसको मुखबाट 'पापी !' शब्द मात्र उच्चारण हुन्थ्यो !'

डाक्टर र इन्स्पेक्टर एकै साथ आए। डाक्टर आउनभन्दा पहिले दुलहीले संसारबाट विदा लिइन्। हिंजो जति खुशी थिए त्यति आज दुःखी हुँदै तिनी बरातीहरू मलामीको पद्वी ग्रहण गरेर मृत शरीरलाई लिई सागरमा गए।

बिचरा राजन् हिजोमात्र फूलको मालाले पूजिदै आएका थिए। आज फलामको माला पहिरी 'मामाको घर' ( जेल ) तिर प्रस्थान गरे।

हाय ! सुहाग-रात ! भन्दै सबैले अँध्यारो मुख लगाए।

गुल्मी वाङ्ला पसल



# बादल बनेकी प्यारीसित

—कृष्णहरि शर्मा

सुख र दु:खको साथी बनेर
नव यौवनको पीड़ा हथ्यौ
हाँस्दै मुसु-मुसु दाँत देखाई
स्वर्गीय सुखको नमुना दिन्थ्यौ

पल - पलमा संझी - संझी म थिएँ प्यासी तिम्रो रूपको
क्षण - क्षणमा हुन्छु पागल तिमी भयिछौ बादल
तर तर आँसु नयन रसिला झर लौ आज सलिल बनेर
दिन - दिन घुम्दै खोजिरहन्छु प्यासी तिर्खाएर मऱ्यो

अग्नि ! तिमीले याद गरिनौ
थिइन् ती मेरी प्यारी
केको रिसले छाड़ी गइहुन् ?
कसरि निक्ल्यो पापी प्राण

अर्धाङ्गिनी हौ तिमी मेरी मलाई टुलुटुलु हेर्दीहौली
कसरी छाड़ी बस्न सकु मुख तिम्रो कस्तो भएहो
मृदुल बनेर चाँडै आउ कसरी चिनुला प्यारीलाई
नत्र यो मन रोइरह्यो वायुलाई लेखी पठाउ

पवन ज्योति कमल सब ती
खेलने तिम्रा संगिनी हुन्
किन बनिहौ प्यारि ! बादल
किन भनिनौ मलाई

लरवर पुस्तक कापी मेरा
कसले वटुलीं देला
मैला प्यारी लुगा सब यी
कसले धोइदेला ।

माकुराले जाल लगायो
रुन्छ धुरू-धुरू कोठा
अँध्यारो छ दिन यो मेरो
चाँड़ै विजुली बनी आउ

चैत आयो आयो वैशाख
अझ पनि प्यारी कहाँ गयौ
कहाँ छौ हे प्यारि ! ऐले
कसरी मेरो चित्त बुझाऊँ

खल खल मेरो पसिना बग्छ
छेकिदेउ घामलाई
तप्त भएको यो मनलाई
शीतल चाँड़ै बनाउ

संझन्छु म दिन-दिन रुँदै
तिमी भनि मलाई बिर्सीहौ
अलितल आई पर्खी बसे है ?
म पनि आऊँछु बादल बनी

सामाकोट, पाल्पा



# हाम्रो धर्म र समाज

—विनयकुमार कसजू—



समाज राष्ट्रको वलिष्ठ अंग हो। जहाँ मनुष्य छन्। त्यहाँ समाज कुनै न कुनै रूपमा अवश्य छ। जहाँ समाज छ त्यहाँ त्यसको उत्थानको लागि व्यक्तिगत वा सामुदायिक नियमहरू अवश्य छन्। समाजको प्रत्येक अंगको विकास गर्ने र त्यसको उचित व्यवस्था गर्ने नियम नै धर्म हो। अर्थात् धर्म त्यो नियम हो जसले कुनै व्यक्ति, समाज औ राष्ट्रको कल्याण गर्छ। वास्तवमा धर्मको क्षेत्र विशाल छ। यस भित्र धेरै चीजहरू आउँछन्।

विभिन्न देशमा विभिन्न धर्म छन्। नदीहरू अन्त्यमा समुद्रमा गै मिसिए झैं विभिन्न धर्मले—ढिलो या चाँडो—सच्चिदानन्दमा मिलाउँछन् अर्थात् मोक्ष प्राप्त गराउँछन्। नियम या धर्मले कूकर्म या पापबाट बचाउँछ। धर्मले गर्दा नै आजसम्म मनुष्य बाँचेकै छ। धर्मले गर्दा नै मानिस ठूलो-ठूलो अपराध गर्नबाट बँच्छ। अधर्मले गर्दानै आज विश्वमा—विशेष गरी पश्चिमी देशहरूमा—शीत युद्धको भयंकर लहर चलेको छ। परमाणविक शक्तिले सम्पन्न देशहरू आज आफ्नै शक्तिले संत्रस्त छन्। मानवता लुप्त प्रायः छ।

आवश्यकताको जति पूर्ति भयो उति आवश्यकता बढ्दै जान्छ। जति आवश्यकताको वृद्धि हुन्छ त्यति अशांति छाउँ छ। पश्चिमीहरूलाई आज जति भौतिक वस्तुको आवश्यकता छ त्यति पूर्वीहरूलाई छैन। यसैले हामी उनीहरूभन्दा सुखी छौं। भौतिकदृष्टिले उनीहरू अवश्य सुखीछन्; तर उनीहरूको आत्मामा एक चीज सधैं खटकिरहन्छ। उनीहरूले केही चीजको अभाव महसूस गर्छन्; यसैले उनीहरू शांति पाउन्नन्।

पहिले मानिसहरू हिंसक थिए भन्ने हाम्रो नङ र दाँतले प्रमाणित गर्छ, तर आज हामी सुसंस्कृत भएर बस्न जानेकाछौं। यो कसले सिकायो ? धर्मनै त्यो सूत्र हो जसले मनुष्यलाई प्रेम गर्न र मानवताको पाठ पढाई बिनाभेदभाव बस्न सिकाउँ छ। छोराले बाबुको र आफूभन्दा ठूलाको मान गर्छ; बाबुले परिवारको पालन पोषण गर्छ; आमाले भित्री धन्दा गर्छिन्। यी नियम धर्मको प्रारम्भिक रूप हुन्। यदि यस्ता नियममा फरक पर्न आयोभने व्यक्ति, परिवार, समाज औ राष्ट्रको पतन हुन्छ।

हाम्रा पूर्वजले जुन नियम बनाए त्यही हाम्रो लागि धर्म हो। त्यसबाट बहुउन्नति हुन्छ। नुहाए धर्म हुन्छ, घर सफा राखे लक्ष्मीको वास हुन्छ, पूजापाठ गरे धर्म हुन्छ आदि यस्ता धार्मिक नियम हुन्, जसका वैज्ञानिक आधार छन् यसबाट एउटा व्यक्तिको जीवन कल्याणमय हुन्छ। पाटी, पौवा, मन्दिर बनाए; चौतारो चिने; धारा बनाए धर्महुन्छ, आदि नियम समाज कल्याणार्थ बनेका हुन् जसका उपयोग यथार्थ छन्। यसता अनेक आदर्श नियमहरू छन्, जो हाम्रा पूर्वजले बनाएर गए औ आज हामी धर्म भन्छौं। यसैको पालनले सबैको कल्याण हुन्छ।

धर्मोल्लंघन गर्ने कैयन खराबीहरू हाम्रो समाजमा आए, जस्को हामी यहाँ विचार गर्छौं र त्यसको लागि वैज्ञानिक तथ्य खोज्छौ। किन भने हाम्रा पूर्वजहरूले जुन नियम बनाएर गए ती सबैमा वैज्ञानिक तथ्य कुनै न कुनै रूपमा अवश्य छ। (यहाँ यो बिर्सन हुन्न कि प्राचीन कालमा हाम्रो विज्ञानको चरम उन्नति भएको थियो। हाम्रो भन्नाले यहाँ भारतवर्षको अर्थ हुन्छ।)

समय परिवर्तन भएकोले हाम्रो समाज र धर्ममा खराबी आयो, पश्चिमी सभ्यताले छोयो, तर पश्चिमको अनुकरण ठीकसित भएन। हाम्रै समाज भित्र पनि विकार आयो। धर्मद्वारा स्वार्थपूर्ति गरिन थालियो। धर्मको नाममा कैयन् अपराध भए। धर्मको नाममा कैयनका जीवन नष्ट भए। वाल-विवाह, जातिभेद धार्मिक ग्रन्थहरूको एकाधिकार आदि धर्मको आडमा लुकेका ढोंग-हरू जस्को खाटमा लुकेर वस्यो त्यसैको रगत चुस्ने "उड्डुस" जस्ताहुन्। धर्ममा ऊँच नीचको भेद छैन। गीतामा श्रीकृष्णले भन्नुभएको छ—

"समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः।
ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम्॥" (९।२९)

अर्थात् "म सबै प्राणिमा समान रूपले व्याप्त छु, न कोही मेरो अप्रिय छ न मेरो प्रिय नै; तर जसले मलाई प्रेमले संझन्छ ऊ नै ममा छ र उसैको सामु म प्रकट हुन्छु।"

वाल-विवाहवाट भएको चरित्र भ्रष्ट र जीवन नष्टको वर्णन यहाँ गरिराख्नु पर्दैन होला। धर्मको नाममा उदर पूर्तिको लागि निरपराध पशुको हत्याको विवरण पनि यहाँ लिनु पर्दैन होला। जगत जननीको सामुमा तिनकै पुत्रलाई मारेर त्यसको रगत मुखमा राखिदिनु कहाँसम्मको पैशाचिक कार्य हो? महामाया भगवती यदि जगतकी आमा हुन् भने पशुकी पनि आमाहुन्। बली तान्त्रिक मतको आधारमा दिइन्छ, तर तान्त्रिक मत आश्चर्यको खेल देखाउने र शत्रु वश गर्ने तामसी मत हो, जसले समाजमा बैमनस्य आउँछ। यसैले समाज कल्याणार्थ यो मत त्याज्य छ। धर्मको आडमा लुकेका यी ढोंग हरूले गर्दानै नवयुवकहरूमा धर्म विरोधको भावना पैदा हुन्छ। वास्तवमा धर्म निष्कलंक छ। यसको आढमा पाप गर्नु पुलिसको लुगा लगाएर अपराध गर्नु जस्तै हो। त्यसले अवश्य कडा सजाय पाउँछ।

हाम्रो समाज यस्तो भैसक्यो कि हामीले वाल्यावस्थामा नै पश्चिमी सभ्यताको अपूर्ण नक्कल गर्न थाल्छौं। आफ्ना छोरा-छोरीलाई त्यस्तै भाषा

औ वस्त्रमा हुर्कउँछौं । फलस्वरूप आफ्नो समाज र धर्मका सबै मान्यतालाई तोडेर पश्चिमीको अंधा अनुकरण गर्न थाल्छन् उनीहरूको लागि माता-पिता, धर्म र समाजलाई त्याग्नु खेलवाड जस्तो हुन्छ। जूत्तासित खानु, ठूलाको अवहेलना गर्नु आदि विकार आउँछन्। यो अंधा अनुकरणको फल हो। वैज्ञानिक विश्लेषण खोज्नेलाई जर्मन वैज्ञानिक पाश्चरको किटाणुवाद ( Germs Theory ) याद हुनुपर्छ। खराब वस्तुमा रोगाणु र असल वस्तुमा जीवाणु हुन्छन्। यसैले खाने समयमा जुत्ता जस्तो रोगाणुजन्य चीज-देखि बँच्नु उचित हो। मांसाहार दिमागले कामगर्नेहरूको भोजन हैन। यसले उत्तेजना बढछ र मानसिक विकार उत्पन्न हुन्छ। मांस तामसी खाना हो। यसैले यो त्याज्य छ। यी बाहेक हाम्रो समाजमा कैयन विकार छन् जो उन्मूलननीय छन्।

इतिहासका विद्वानहरूको भनाई छ कि इतिहास स्वयं दोहोरिन्छ। यसर्थ अब त्यो समय टाढा छैन होला जब वैदिक मन्त्रले वातावरण गुञ्जित हुनेछ; होमको धुवाँले सबैं स्वस्थ हुनेछन् औ यथा समयमा वृष्टि हुनेछ, राम-राज्य छाउने छ तथा योगी मुनीहरू योग तथा समाधिमा लीन हुनेछन्। द्वितीय विश्वयुद्धमा भएको भयानक जन-संहारले प्रत्येक मनुष्य त्रस्त छ सबै चीर आनन्द चाहन्छन्। धर्मविना यो असंभव छ। पश्चिमी देशहरूको दशा देखेर हामीले शिक्षा लिनु परेको छ। वेदव्यासले जुन चेतना छोडेर जानुभो त्यही हाम्रो अमर ज्योति हो, त्यसको पालनाले हाम्रो कल्याण हुन्छ। वेद-व्यासले सम्पूर्ण मानवको लागि वैज्ञानिक औ आध्यात्मिक तथ्यलेपूर्ण मानव धर्मको ज्योति हाम्रो लागि छाडेर जानु भयो। उहाँको प्रत्येक वचन हाम्रो लागि धर्म हो। यसैको पालनले हाम्रो आध्यात्मिक उन्नति हुन्छ। आध्या-त्मिक उन्नति नै वास्तविक उन्नति हो किनभने—

"ज्ञान मर्दछ हाँसेर ;
रोई विज्ञान मर्दछ।"

( बाँकी पृष्ठ ४४ मा )

# तिमीले नसम्झदा

—ध्रुव भट्टराई

औंसीको रातमा
तिम्रो कालो केश लगेर
शशिलाई चप्प छोपिदिएकोछु
तिम्रा आँखाका परेलालाई-
तिमीलाई नै छोप्न भनेको छु
तिम्रो अधरलाई
म स्वयं लिएको छु
तिमीले अँगालो नहाले पनि
म त अँगालो हाल्दै छु
तिमीले संसारै भुले पनि
म तिमीलाई भुल्नै सक्दिन
तिमीले नसंझदा पनि
म त तिमीलाई याद गर्दैछु।

साउनको रातमा
निर्दयी वादलले
सुटुक्क लुकाइदिन्छन्
कमलिनीलाई आफ्नो साथमा
अन्त: करणको पीडाले
आँखाका आँसु रोक्न नसक्दा
वर्षदैछन् वर्षाको रूपमा
वाढीहरू आएर हुत्याउंदै छन् किनारमा
त्यसैमा पनि तिमीले नसंझदा
पागल छु म तिम्रो बिछोडमा

व्याकूल छु प्रत्येक रातमा
तिम्रो आँचललाई लगेर
बिहानीपखको उषामा रगाइदिनेछु
म स्वयं रगिनेछु
र - तिमीलाई पानी लिएर रगाउँनेछु
दोपहरको खपी नसक्नु घाम पनि
तिमीलाई शीतल छायाँ पुऱ्याउनेछु
तिमीले नसंझदा पनि
म तिमीलाई संझदैछु ।

वाङ्ला, गुल्मी



( पृष्ठ ४२ को बाँकी )

महामहिम डा० राधाकृष्णन भन्नुहुन्छ "If we protect Dharma, Dharma Will be our protector." अर्थात "यदि हामीले धर्मको रक्षा गऱ्यौंभने धर्मले हाम्रो रक्षा गर्नेछ । वास्तवमा धर्मविना कसैको रक्षा हुन्न । आफ्ना पूर्वजले छाडेर गएको जुन नियम छ त्यसैको पालनद्वारा धर्मको रक्षा हुन्छ र यही नै सबैको कर्तव्य हो । धर्म परिवर्तन अथवा उल्लंघन गर्ने आवश्यकता छैन । किनभने जुनसुकै धर्मको पनि लक्ष्य एउटै हो— उन्नतिशील एवं आनन्दमय जीवन बनाउनु । यसको अर्थ यो हैन कि तपाईं पुरानै नियममा रहनोस् । युग बदलियो; यसैले सबै धर्मको अध्ययन गर्नोस तथा अच्छाई सबैको लिनोस बुराई त्यागिदिनोस । कुनै चीजको पनि ठीक अनुकरण गर्नोस; तर अनुकरण कहिल्यै सफल हुन्न । सबै चीजको निष्कर्श वेद हो । यसमा नभएको कुरा कहीं छैन । यही मननीय छ । पाठक महानुभाव ! समाज हाम्रो समुदाय हो तथा धर्म हाम्रो उन्नतिको मार्गहो यसर्थ यसैको पालन कल्याणकारी छ ।

रूरूक्षेत्र, गुल्मी



# शिक्षा

—हरिप्रसाद ज्ञवाली

शिक्षा संसारको अद्वितीय पथप्रदर्शक चीज हो ।
यो अनन्त छ, अमूल्य र ग्राह्य पनि छ ।
यो कानोलाई रानो बनाउँछ र मूर्खलाई सज्जन ।
शिक्षा हो मूख्य पेवा,
यसले दिन्छ मीठा मेवा ।
यसले गर्छ नित्य सेवा ।
यसले पक्षपात गर्दैन,
जातीयताले डर्दैन,
सम्प्रदायमा लड्दैन ।
यो भन्छ :—
मेरो दान गर
धनहीन भएर नमर
मेरै दानले पेट भर ।
तर
कैले-कैले मेरो पनि संझना गर ।
तिमी मेरो सहारा लिन्नौ त ?
तिमी कुहुनेछौ, गनाउँनेछौ ।

जो कि आज,
तिमी रोचक हुने लायक छौ ।
शिक्षाले नै कविलाई कवि बनाउँछ ।
जस्तै;
रवीन्द्र तथा सेक्सपियर ।
शिक्षाले नै गान्धीजी महात्मा भए ।
र
नेहरूजी चाचा भए ।
धर्मशास्त्र पनि भन्छ :—
"विद्वान् सर्वत्र पूज्यते"
यो सबै हो शिक्षाको प्रभाव ।
अत:,
शिक्षाले सूचित गर्दैछ:—
ए शिक्षित !
यो तिम्रो कर्तव्य हो ।
अज्ञलाई सज्ञ गराऊ ।
उसलाई पनि उस्तैगर ।
जसरी तिमी शिक्षित भयौ ।
स्कूल-कालेज छैनन् ?
माग गर, खोज-प्रयास गर ।
उन्नतिको मूल हो शिक्षा ।
शिक्षाको ज्ञान तथा वितरण गर्ने शिक्षित ।
नत्र शिक्षित र मूर्खमा केको भेद ? ।

गेह्वाँ दांसीर, गुल्मी



# वेदको बाटो

—माधव ज्ञवाली

"संगच्छध्वं सँवदध्वं संवो मनांसि जानताम्"
"देवा भागं यथा पूर्वे सज्जानानामुपास्यते"

राम्रो बाटो वेदको छोडेर गयौं हामी विश्वमा फाटेर
एक साथ सबै हिंड्न बाटो देखाएको,
बोल्न पनि एक सत्य बोली सिकाएको;
त्यो वेदको बाटोलाई कैले नछोडेर,
सुस्त - सुस्त लंकिजाउँ देश अँगालेर,
नभुलिद्यौं वेदको बाटो जन्म भूको कलेजो संभेर
अघि हाम्रा पुर्खाहरू यही बाटो ताकी,
संसारमा भए उच्च पुगी स्वर्ग माथि;
त्युल्य थियो सुत्ने बस्ने खाने पीने ठाउँ,
भेदबिना उन्को रह्यो प्यारो अमर नाउँ,
भिन्नता हो संसार भरमा मानिसलाई पशु झैं लडाउने,
बिर्स्यौं हामी साथी - साथी एक बाटो हिंड्न,
आजकल भोगिदैछ भई छिन्न - भिन्न;
यो बाटोलाई याद गरी नबिर्सेको भए,
हामी पनि उच्च बन्थ्यौं जस्तै उनी भए,
सानो ठूलो छोडेर भेद जाउँ हामी गोरेटो संझेर,
सबै मिली काम गरौं साँचो बोली बोलौं,
गरीबको रक्त पीने अन्यायलाई पोलौं;
यस्तो हाम्रो भिन्नताको बीज मेटिदेला,
संसारको प्यारो चीज फेरि भेटिएला;
छैन बाटो यसलाई छाडेर नत्र गयौं विश्वमा गडेर,

(गुल्मी) गेह्वाँ शृङ्गचूली

# भिखारी

—लक्स्मीनाथ शर्मा

रुमलिएर रँगालिएको रन्थनिदो रुवाइमा
धमिलिएर धुम्रिएको धसिंगरे धुवाँमा
बडबडाएर बगिरहेको बाढ़ीको बेगमा
तुषारिएको, तात्तिएको तटको तीरमा
मेरो मर्म मडारिन्छ !

माया मारे मेराहरूले मलाई
पत्यारै पार्न पाइन पैसा पाएकाहरूलाई
दुनियाँमा देख्दै देखिन दयालु दाताहरूलाई
कसैले केर्दैन को, कसो, के कसैलाई
पापी पीपले पोल्यो पूण्य पृथ्वीलाई !!

भतुवा, भिक्षुक, भिखारी, भूस हूं म
फ्याँक्छन् फ्यात्त, फुत्कार्छन्, फकाउँदैनन्
हिर्काउँछन् हकार्छन्, हेप्छन् हेर्दैनन्
वौलाहा, बटुवा, बेसहारा, बबुरो, बुच्चे
मेरो मर्म मैंमा मडारिन्छ !!!

फिक्कल, इलाम



# स्मरण

—केशवराज शर्मा

स्मरण भन्ने शब्दमा विचार गर्दा एक कस्तो कस्तो चीज जस्तो लाग्छ, यो अदृश्य वस्तु नजाने कति व्यापक रहेछ, जस्मा कि स्रष्टाको तमाम सृष्टीमा समस्त सत्व जातीका अनन्त अंतःकरणमा क्षण-क्षणमा घुमिरहेको छ। यो स्मरण वृद्धिकर्ता हो या ह्रासकर्ता 'या अरू कोही यो स्मरण मस्तिष्कसित संबन्धित छ या हृदयका अनन्य प्रेमसित र भावसित। यदा कदा विचार गर्दा र अनुभव गर्दा मस्तिष्कलाई केही-केही जोर परे जस्तो हुँदा निर्भयपूर्ण भन्न सकिन्छ कि यो मस्तिष्कसित संबन्धित छ, अब तुरुन्त प्रश्न उठ्छ कि मस्तिष्क केहो ? या बुद्धि, बुद्धि त भन्यौं, परन्तु यो बुद्धि केमा आश्रित छ र के हो भन्न हामी हिचकिचाउँदैनौं। के यो शक्तिसित सबन्धित छ या भौतिक सबन्धि तमाम ऊर्जाहरूसित। जब हामी ऊर्जातक पुग्न सक्यौं भनि त ऊर्जाको परिभाषा तमाम वैज्ञानिकका बुद्धिले भेट्दासम्मको अथक परिश्रम निम्न प्रकार छ।' "कुनै पनि कार्य-कर्ता ( Agent ) अधिकभन्दा अधिक जति कार्य गर्न सक्छ त्यै नै तेस्को ऊर्जा हो भन्ने"। अस्तु। अतः परिणाम त यस्तो हुन गयो कि जहाँ कुनै पनि कार्य तहाँ स्मरण अर्थात् कार्य र ऊर्जासित-समन्वय राख्ने भएको स्मरणको आपस आपसमा अन्योन्याश्रय संम्बन्ध, अर्थात् कार्यमा एकाग्रता ल्याउन सक्ने र तेस्को निचोडलाई अन्तर्भूत गराउन सक्ने र आवश्यकतानुसार तेस्लाई यदा कदा वाह्य प्रकाशित गर्न सक्ने शक्तिनै स्मरण हो भन्न सकिन्छ होला।

अर्कापट्टी स्मरणको केही चर्चा गर्दा स्मरणलाई अतीत, वर्तमान र भविष्यको विचार गर्न सक्ने एवं सोच्न सक्ने शक्ति पनि भन्न सकिन्छ, या त शक्तिनै स्मरण हो, उदाहरणार्थ जति शैशवावस्थामा स्मरण-शक्ति पनि निहित हुन्छ त्यो जरावस्थामा प्रायः लोप भई बसेको हुन्छ। अतः जति-जति शक्तिको लोप हुँदै गयो उति-उति स्मरण पनि दूर हट्दै जान्छ। परन्तु शक्ति संबन्धी विचार गर्ने हो भनि शक्ति धेरै प्रकारका छन्। तर यस्को संवन्ध मस्तिष्क संबन्धी शक्तिसित नै ज्यादा हुन्छ। यस्का धेरै दाजु भाई पनि छन्, जस्तै मन, ईर्ष्या, क्रोध, ग्लानी र मानसिक दुःख इत्यादि।

विश्लेषण गर्ने हो भनि स्मरण, हृदयसित संबन्धित छ, तर हृदयमा भन्दा वर्ता जोड़ मस्तिष्कमा पर्छ हृदयसित सबन्ध यस्को ठीक उस्तैछ जस्तै कि ज्ञानले समन्वय भएको बुद्धि। ज्ञानका अभावमा बुद्धिको कम आभास हुन्छ र साथै बुद्धिसित समन्वय राख्ने भएको स्मरण पनि कम हुन पर्ने हो, तर ज्ञानसित यस्को समन्वयता धेरै कम छ। जबतक भौतिक सबन्धी अदृश्य वस्तुको ज्ञान नभए र स्मरण हुन त कठिन पर्ला। यस् दृष्टीले देख्ने हो भने स्मरण पनि ज्ञानसित संमिश्रण छ।

कल्पना गर्दा भौतिक संबन्धी अदृश्यवस्तुको पनि स्मरण गर्न सकिन्छ, तर तेस्मा निश्चयताको अभाव र आभासी कल्पना जस्तो हुन्छ। तसर्थ अन्ततो गत्वा यही भन्न सकिन्छ कि स्मरण र बुद्धि एक समान जस्ता र हृदयसित संबन्ध राख्ने कुनै अदृश्य वस्तु हुन्।

अब पुनः अदृश्यात्मक वस्तु स्मरणलाई अन्तः चक्षुद्वारा देख्दा र उसको प्रभावकारीपन सुन्दा यथोचित समयानुसार उसका अनुजरूपी ईर्ष्या, क्रोध, ग्लानी, अन्तर्निहित दुःख या सुखको आभास सागर रूपी अनन्त अन्तःकरणमा तरल कल्लोलको अविर्भूत हुन आवश्यक हुन्छ।

स्मरणमा आनन्द पनि मिल्छ जस्तै कि योगी आफ्नो तमाम यौगिक क्रियाहरूको स्मरणद्वारा 'असीम आनन्द पाउँछ या नायिका या नायक आफ्नो प्रियतम या प्रियालाई संझदा जो आनन्द पाउँछ या ज्ञानी आफ्नो ज्ञानको

गहनताको अनुभव गर्दा जो आनन्दातिरेक हुन्छ तेस् आनन्दले जो स्मरण र अनन्त हृदयको सम्मिश्रणता छ, अतुलनीय उपमा पाऊंछ, त्यँ नै स्मरणद्वारा प्रादुर्भाव हुने आनन्द हो। तेसआनन्दमा चक्षु बन्द हुन जान्छन् अर्थात् इन्द्रिय आ-आफ्ना कार्य विहीन हुन्छन्। यो स्मरणद्वारा हुने आनन्द न केवल मानव मात्रमा विद्यमान, अपितु समस्त स्रष्टा निर्मित सत्वमा पनि प्रचुर-मात्रामा छ।

( बाँकी पृष्ठ ५४ मां )

---

# मूर्ति

—गङ्गाधर घिमिरे

ए मेरी प्यारी ? सुन्दरी नानी सम्झन्छु झलझली ;
तिमीलाई सम्झी प्रेमको वनमा लर्कन्छु लर्लरी।
सड़कमा हिड्दा प्यारीलाई सम्झी मन मेरो धडकन्छ;
अशान्ति सागर प्रेमको माँझ प्यारीको प्यास छ।
प्रेमको बानी एकलै वस्दा मन रुन्छ धर्-धर ;
प्रेमको तिर्खा प्यारीलाई देखी हट्नेछ हर्-हर।
कसरी वसूँ, कहाँ छौ तिमी यो कालो बादल ;
मेटुला कैले प्यारीको प्यास, यो भव्य सागर।
आउन प्यारी ! आउन प्यारी !! तिर्खालाई मेटन ;
हुँदैन मेरो सहाय कोही प्यारीको सिवाय।
प्यारीको "मूर्त्ति" यो दिल भित्र चंचम चम्कन्छ ;
प्यारीको माया, आशामा बसो यो जीवन वित्नेछ।

खाँची ढ़िकुरा, गुल्मी

# उद्बोधन

—नागेन्द्र प्रसाद "हिमांशु"

आज हाम्रो देशपनि अघि बढ्दै जाग्रोस् ।
साहित्यको वाटो लागि शिक्षा नयाँ पाग्रोस् ।।

समाजको सेवा गर्न हाम्रो शरीर पाग्रोस् ।
जीवनको राम्रो फूल चोखो भई जाग्रोस् ।।

मनको यो राग द्वेष दूर भई जाग्रोस् ।
वैमनस्यको भाव पनि नष्ट भई जाग्रोस् ।।

उन्नतिको मार्ग त्यागी अघि बढ्दै जाग्रोस् ।
जीवनको राम्रो फूल प्रेम-जल पाग्रोस् ।।

विकासको समय आज हामी बढ्दै जाऊँ ।
प्रेमको यो विरुवा रोपी मान फल पाऊँ ।।

अज्ञानलाई दूर फाली ज्ञान नयाँ पाऊँ ।
प्रेमकै साथ हामी जता ततै जाऊँ ।।

उत्साहको बुटो हाम्रो सदा बढ्दै जाग्रोस् ।
मानवको लता आज चली माथि आग्रोस् ।।

फूल नयाँ फुल्वारिमा चाँडै फूली जाग्रोस् ।
संसारको भ्रमर पनि रस यहीं पाग्रोस् ।।

जखोला चोपडाकोट, गढ़वाल



# तिमी र म

—सुशील,

बाबु - आमा चाहन्छन् सन्तानको उन्नति
आजका जन चाहन्छन् देशको समुन्नति ;
ऋतुहरूमा गनिन्छ बसन्तको बहार
शिशुहरूलाई चाहिन्छ बाबु - आमाको प्यार, तर
मलाई त चाहिन्छ तिम्रै नै आधार, किन कि-
मेरो रग - रगमा तिमी नै व्याप्त छौ ।!

नायकले चाहन्छ नायिकाको हात
नायिकाले चाहन्छे नायकको साथ ;
राहीले राख्दछ मंजील भेटाउने आस
ध्वान्त मेट्न चाहिन्छ स्वच्छ निर्मल प्रकाश, तर
मलाई त चाहिन्छ ममा नै तिम्रो आवास, किन कि
मेरो जीवनको उद्येश्य नै तिम्रो साधना हो ।।

शराबीले चाहन्छ सिङ्गै पूरा बोतल,
मयालुले चाहन्छ बासुरी र मादल,
चंचलाले चाहन्छे कालो - कालो गाजल,
चकोर पक्षी चाहन्छ स्वातीको नै बादल, तर
मैले त चाहन्छु तिमी नै भएको जंगल, किन कि-
पूजारीले शान्त मन शान्त स्थानकै चाख राख्छ ।।

राजबन्दीले चाहन्छ स्वतंत्रता र मुक्ति
कैदबन्दीले चाहन्छ आफू उम्कने युक्ति ;
प्रिन्सीपलले चाहन्छ शत प्रतिशत रिजल्ट
विद्यार्थीले चाहन्छ प्रोफेसरको कन्सल्ट, तर
मैले त चाहन्छु तिमीनै होउ सन्तुष्ट, किन कि
त्यसैले नै मेरो उत्थानमा हात राख्दछ ।।

मैले त तिम्रै उपासना गर्छु, किन कि
जन्मेदेखि मर्दासम्म नै तिम्रो साथ छ;
मैले त तिम्रै फूलको वासना लिन्छु, किन कि
तिम्रै पाऊमा सारा जगको माथ छ।।

कपिलवस्तु



---

( पृष्ठ ५१ को बाँकी )

अतः जहाँ स्मरण छ त्यहाँ हृदय, तर यहाँ हृदयको यो अर्थ हैन कि जो मनुष्यको हृदयमा हाम्रो भौतिक चर्म चक्षुद्वारा देखिने। जो दुई फोक्सोको ठीक माथिरको रातो पदार्थ हो, परन्तु, तेसैमा निर्निमेष गहन दृष्टी लगाएर हेर्दा धुक्-धुक् नजानिदो चल्ने चक्षुद्वारा देखीने तर संभ्कन नसकीने', तेसैका अनन्त गहराईमा विद्यमान भयेको अदृश्य वस्तु नै हृदय हो। त्योबिना मनुष्य पागल या निष्क्रिय जस्तो हुन्छ, अतः स्मरण या हृदयको अनुपस्थितिमा, मानव या समस्त प्राणी-प्राणीको जस्तो व्यवहार या कार्य-विहीन च्युत भई बसेको हुन्छ। अतः स्मरण एक यस्तो अछेद्य अभेद्य एक अलौकिक वस्तु हो, जो समस्त प्राणीलाई विद्यमान छँदासम्म चेतना दिइराखेको छ।

अतः स्मरण एक, हृदय-शक्ति, ऊर्जा, बुद्धि, ग्लानि, क्रोध, ईर्ष्या, दुःख-सुख आदिले समिश्रण भएको र अल्प-तर-उपर्युक्त भावनालाई छर्लक्क पारेर हेर्दा, एक स्वच्छ नजानिदो पटतन्तुमा मिसीएको मसीनो तर चिप्लो डोरा जस्तो चक्षुद्वारा अदृश्य एक शुभ रेखा हो।

यो रेखा त्यो पटतन्तुमा धागाको जस्तो स्थिति भएर ठीक उस्तै प्रकारले बसेको छ जस्तै कि तमाम तीखा-तीखा काँड़ा रूपी, ईर्ष्या, डाह, क्रोध इत्यादिमा सुकोमल-कमलको फूल रूपी सुमधुर-स्मरण, मानों मलिनताको अनुभव गर्छ।

—गुल्मी कोलौदी



# सौतिनी आमा

—प्रेमनिधि ज्ञावली

"ए ठूलानानी ! ए 'ठूला' नानी ! हेर्नुहोस्न मेरो जिऊ छिया छिया भैसकेको छ । काम गर्न लाग्यो हात् लाग्दैन, खान गयो एक् गास् पनि जान्न, जिऊ पानी-पानी भैरहेको छ, मुटुकले थात् छोड्न लाग्यो, कुन सकस्ले देवीभावगवत् र श्रीमद्भागवत् आदि लगाएर एउटी प्याउसी जन्मेकी थिई । भात् खोई जत्ति के गरेको थियो कि तेस्कालेका खोइरे कुकुर-ले सातो लगिदियो । जसरि हुन्छ टक्रक्क हुने गरी सातो फुकिदिनोस्न" भन्दै गैरा गाँऊकी पातली बज्यै छोरी बोकेर घिउसे पाड़ेका पिड़ीमा टुस्स बसिन् । रोमाकान्त र पातली बज्यै वास्तवमा सुखी र गण्यमान्य धनी परि-वारका थिए । आश मार्ने बेलामा तीनवटी स्वास्नीपछि एउटी छोरी भएकी थिई । अरू स्वास्नीहरूका सन्तानै केही नभएकाले त्यति पति-प्रिया थिएनन् । जेठी सुशीलाको स्वभावलाई देखेर जम्मै गाँऊ घरका मानिसहरू उनको सराहना गर्दथे । गाँऊ-घरमा कसैलाई दुःख, पीर परेको छ भनि सुशीला पुग्दथिइन् र उनीहरूको दुःखको साथमा दुःख र सुखको साथमा सुखको अनुभव गर्दथिईन् । पोरसाल माझगाऊँका पण्डित मर्दा पण्डि-त्नीलाई जिऊ धन दिएर सहायता गरेकी थिइन् । पाण्डित्नीलाई सहा-यता गर्ने उनीदेखि अलावा क्वै पनि थिएन, किन कि पण्डितजी काशीमा गई पढेर पण्डित भएका थिये तापनि हलो जोत्न हुन्छ भनि भनेकाथिए । अतः यसै कसूरमा उनको गाऊँले भात काटेको थियो । सुशीलाले पतिको

र सौताहरूको पनि मन वचनले हित चाहन्थिइन् सौताकी छोरीलाई आफ्नै छोरी टान्दथिइन्। शोभाको सातो के जाला सुशीलाको जिऊ दुक्-दुक् भएको थियो।

"खै !!! मैले के जानेको छु र त्यै पनि हेरिद्यूला; हेरे पनि कस्ले पत्याउँछर। सातो, बोक्सी, भूत, श्मशान, नाग आदि अचाल्का नयाँ जमानामा बूढा मान्छेले भनेको कसले पत्याउँछर अझ पोहोरसालदेखि तल्लो चौक्मा डाक्टर आएको छ, भन्ने सुन्छु, सातोमा पनि सुई घोंच्ने, बोक्सीमा पनि सुई घोंच्ने, श्मशानमा, पनि सुई घोंच्ने गर्छ गरे उस्को वाउ घोंचेर नै सबै भाग्छ भने झैं। हुनभनि भैंसी दुहुने बेला हुन लाग्यो, खै !! खै ! खरानी, कहिल्यै नआयेकी हेरिदिऊँ भन्दै घिउसे पाड़ेले खरानी हातमा लिएर फू फू गर्न थालेका थिए कि कहींबाट खबर आए जस्तो गरेर घोरिएर भने कि बज्यै ! कले तपाँईलाई सातो भनिदियो। शोभा नानी त बोक्सी लाए जस्तो गरेर अम्मारिरहेकीछन्।

"हुन सक्छ नानी, कले के जानेको छ र घरमा कस्ता-कस्ता मान्छे आउँछन्। यी बोक्सी राड़ा-राड़ीहरूलाई पनि अर्को सुख र चयनले बसेको देख्न नहुने। नानी ! तपाँईले टक्रक्कै पार्नु भयो, जे जसरी हुन्छ यसको उपाय गर्नुहोस् र मेरी छोरीलाई बचाउनुहोस, भन्दै पातली बज्यै सुरुक्-सुरुक् गरी रुन थालिन्। घिउँसे पाड़ेले चावलका दाना छाम छूम पारेर बोक्सिनी रहिछे भने, पातली बज्यैले को होला कस्तो होला भने र सोद्धा घिउँसे पाडेले अघि कामले उन्मुक्त भएको यौवनावस्थाको बदला लिऊँ भनी मनमा विचार गरेर शुद्ध सुशीलालाई बोक्सिनीका आरोप केही विचार व्यक्त गर्न थाले" खै चावलका दाना छाम छूम पार्दा त एउटी गोरी-गोरी सधवा जस्ती लाग्दछे। उस्का पनि छोरा छोरी छैनन् जस्तो लाग्दछ धेरै जान्न त धामी नबसी हुँदैन।

पातली—नानी ! तपाँई अरू वरी परीका धामीभन्दा असल धामी

हुनुहुन्छ। म कहाँ जाऊँ मैले भनेको झट्ट कले मान्छर। हेर्नुहांस् शोभा झन् पलांक् पुलुक गर्नथाली। बाबू! तिमीलाई के भयो ? मेरो बा! कति दुःख पायौ नि! कुन्वेलामा जन्म लिइछौ, जन्मेदेखि दुःखै दुःख पायौ। तेस् हैजाले लाने बोक्सिनी राँड़ीलाई मैले के बिगारेकी थिएँर यस विचरी-लाई दुःख दिन परेको होला।"

अइले त म भैंसी दुहुन जान्छु संध्या परेपछि धामी बसौंला भन्दै घिउँसे पाडे गोठतिर लागे। पातली बज्यै घिउँसे पाडेकी दुलहीसित कुरा गर्न भित्र पसिन्।

संध्या भयो। मजेरीमा गाईका गोवरले लीप पोत गरियो। मकैका तीनवटा उल्टा रोटा हालेर राखियो। धामीलाई चाहिने अरू सर सर्जाम-मास्, कालो धागो आदि पनि राखियो। घिउँसे पाड़े टोपी फालेर थाल ठटायेर फलाक्न थाले, सुशीला प्रति जो बोक्सिनीको आरोप लगाउनु थियो लगाए। के खोज्छेस भनी सोद्धा एउटो कालो पाठो र तेलको धूप। धामी-को काम समाप्त भयो। पातली बज्यैले आशाको सास लिइन्। शोभालाई उस्तै भए पनि पातली बज्यैलाई सञ्चो लागेको अनुभव भयो।

घिउँसे पाड़े—बोक्सिनीको भक्कल चाँडे दिनुहोलार पो शोभा नानीलाई चाँडै सञ्चो लाग्ला।

पातली बज्यै—भक्कल त म भोली नै चढाइदिन्छु। मैले जानेकी पनि केही छैन दुःख भए पनि येति काम हजुर्ले नै गर्नुपर्छ। "के खोज्छेस् कानी! आँखो" भन्ने उखान झैं घिउँसे पाड़ेले बोकेको मासुलाई संझेर राल् छोड़दै "हुन्छ" भने।

रोमाकान्तको परिवारमा शोभा सित ६ जना जहान थिए। खान पिनको ताला कुल्ची पातलीका हातमा थियो। तेस्दिन पातली नभएको हुनाले कसैले चमेना खाएका पनि थिएनन्। अझसम्म ऐनामा आगो पनि बोलेको

थिएन । रोमाकान्त पनि शोभाको बिमारीको उपचारको लागि तल्ला चौकको डाक्टरसंग गएका थिए वयार आएका थिएनन् । पातली बज्यै घर पुग्ने वित्तिकै शोभाले सुशीलालाई देखेर आमाको काखबाट झर्न खोजी । सुशीलाको शोभासंग अगाढ प्रेम थियो । कैले कैले रातीमा शोभा ज्यादैनै रुन्थी। आमाले फुल्याउन कसै गरे पनि सक्दैनथिइन् । परन्तु सुशीला गएर समाते-पछि चुप्पै हुन्थी ।

पातलीले सुशीलालाई सौता संझी सौतेलापनको ईर्ष्या त अवश्य गर्थ-थिइन् परन्तु आज सुशीलाका प्रति पातलीको धेरै विकृति आएको थियो । सुशीलाले शोभासंग जो प्रेम गर्दथिइन् ती सबै विपरीत रहिछन् भन्ने सोच्न थालिन् ।

शुशीलाले शोभालाई आफूतिर आउन खोजेको देखेर "यति बेलासम्म ऐनामा आगो पनि छैन, खान पिन गर्न पर्नेहो घिऊ चावल झिकिदेऊ वैनी !" भन्दै शोभालाई समात्न अगाड़ि सरिन । "अन्न किन खान परो मलाई नै खाए हुन्छ भन्दै पातली बज्यैले सुशीलाको हात झटकार दियेर सेतीलाई छातीमा लगाइन । शोभा शुशीलासंग जान नपाएर चिरीयेर रुदै थिई यत्तिकैमा के हो ? के हो ? भन्दै रोमाकान्त आइपुगे ।

"के हुने हो ! मान्छेले मान्छे खान थालेपछि यस् घरमा अब कसरी वस्ने आफ्ना जहानले आफ्नै जहान खान थालेपछि । बिचरलाई किन दुःख दिन पर्दोहो मलाई नै चटक्क पारेपछि त हाइ सुक्ख हुन्थ्यो भन्दै पातली रुनथालिन् । रोमाकान्त अलमल्ल परे । सुशीला निस्तब्ध भएर उभिएकी थिइन । रोमाकान्तले सोध साध गर्दा पातलीले दिनको सबै कुरा वयान् गरिन् र रोमाकान्तसंग भन्न थालिन् यो घरमा अब कसरी बस्ने ! या त यही बोक्सिनी वस्द छे या मैं बस्छु । यदि तपाँईले बोक्सिनीलाई आजऊनै घरबाट निकाल्नु हुन्नभनि म आफै हिड़दछु । मेरा वा आमा मरे पनि दाइ भाइ त छन् । तेस्ती कंगाल्नीकी छोरी पनि म हैन । चाँडै निदो दिनु होस नत्र

म हिंडछु। रोमाकान्तले केही उत्तर दिन सकेका थिएनन्। सुशीलाले सुनि-रहेकीथिइन्। अगाड़ी सरेर भनिन् बैनी ! म गयेर शोभालाई सञ्चो लाग्छ र सबैलाई निको लाग्छभनि म जान्छु तिमी किन जान्छ्यौ बस। आफू (पति) ले पनि केही दुःख नमानोस म जानेछु। पातलीः—'के को जाने-छु हो जानेभए त बोक्सिनी चाण्डाल आजै जा। ऐले भर्खरै जा। रात भरीमा मेरी छोरीको प्राण जान बेर लाग्दैन।

प्राण !!! हे ईश्वर ? यस्तो कहिल्यै नहोस्। शोभा धेर धेरै बाँचोस्। बैनी पातली पनि धरै वर्ष बाचुन् भन्दै सुशीला घोर अन्धकारमा हिंड़न थालिन्। घोर अन्धकार छ। बाटो कहीं केही देखिदैन। पौषको दाँत बजाउने जाड़ो छ। विहानदेखि मुखमा पानी परेको छैन। गाऊँ घरका सबै सुतीसकेका छन्। कसैको घरमा गएर शरण मागोस् भनि सती साध्वी सुशीला यति राती अर्काको घरमा गयेर एक्लै कसरी बसोस्। अतः आफ्नो तल जुम्ले खोलाको गोठमा गएर बस्ने विचार गरिन्। बल्ल बल्ल गोठमा गएर एउटो फलिकामा बसिन्। दिनभरिको परिश्रमले गर्दा जिऊ थाकेको थियो तापनि साँझको घटनाले गर्दा निद्रा परेको थिएन। यस्तै गरी तीन प्रहर बीते चौथो प्रहर बित्न थालेको थियो कि अलि अलि निद्रा देवीले समात्न थालिन्। एक्कासी शोभा बायेस् गर्दै आयेर सुशीलालाई झस्किन्। सुशीला झसङ्ग भइन्। जुन्किरी बाहेक अरू सबै चरा चरले आराम लिऐका थिए।

लोक-लाज बुझाउन सुशीलाको लागि दिनको एक मानो मकैको आटो दिने निश्चय गरे। तेतिले के हुन्थ्योर सुशीला आफ्नो परिश्रमले अति दयनीय अवस्थामा दिन बिताउन थालिन्। माइत गएर आफ्नो दयनीय दशा बताउन पनि रोमाकान्तको बेइज्जत सम्झन्थिइन्। दिन वर्ष बित्दै गये शोभा पनि बढ़दै गयी। सुशीलाले दिनमा एक पटक छुस्को मारेर शोभा-संग भेट गर्दै थीइन्। हिंड़न सक्ने भयेपछि शोभा पनि दिनको एक पटक

जान थाली। कैलै केलै घर आउँदा बेर हुने हुनाले पातलीले शोभालाई गाली गर्दै बिमारी भए को पुरानो इतिहासको पोको फुकाउदै थीइन।

शोभाले विचार गर्दथो "आमा अरू बोक्सिनी!"

दिन जान कति बेर लाग्ने र शोभा ८ वर्षकी भई। शोभालाई विवाहको निमित्त माग्न मानिस आउन थाले। सुशीलाको खान पिन, नरास्रो तजवीज संग नभएको हुनाले बिमारीको ओछ्यान्‌मा सुतेकी थिइन्। उसको हेर्चाह गर्ने क्वै पनि थिएन। दिनको एक फेर शोभासम्म आउँथी र भात खोउँथी। शोभाको विवाहको दिन पनि आयो। सुशीलालाई बिमारीले चाप्दै गएको थियो। साँझ जंति आउने भएको हुनाले शोभा विहानै आमासंग जान्छे।

शोभा—आमा! कस्तो छ!

सुशीला—आज वर्ता सकस भएको छ।

शोभा—केही खाने हो?

सुशीला—आज त तिम्रो विवाह हो के र तिम्रो जल खाएर मरूला भन्ने छ। आज खान्न।

साँझ बाजा बजाउँदै जंति आए। विवाह भयो। विहान दुलही अनवाउनको लागि डोली तैयार थियो। सबै माइतीहरू गहभरी आँसु लिएर उभियेका थिए। एक्कास्सी सुनियो कि आज राती सुशीला आफ्नो धाममा गइन् गरे। शोभा सुन्नेवित्तिकै मूर्छापरेर पल्टिन्! होसमा आएपछि पातलीले संझाउदै भनिन् छोरी! किन रुन्छ्यौ! अबेर भैसक्यो। सबै जंतिहरूले पर्खिराखेका छन् सौतिनी आमा मरे पनि म छदैं छु। उठ! गाउँलेहरूले हेरिराखेका छन्।

आमाका अर्तिहरूका वाक्यमा शोभाको हृदयमा सौतिनी आमा भन्ने शब्दले घर गरेको थियो र उसले दमाहाको बजाईमा कर्नालको बजाईमा, नर्सिंगाको बजाईमा सौतिनी आमा भन्ने शब्द सुन्न थाली।

कोलौदी, गुल्मी



# मेरो पुकार



•

हरिप्रसाद उपाध्याय, पौडेल

जस्तै सानो बिरूवालाई बढ़ाउन मलीलो माटो, स्वच्छवायु, शीतल पानी र अलिकति सूर्यका तापको परम आवश्यक पर्दछ, त्यस्तै देशलाई उन्नतिको टाकुरामा पुऱ्याउन आफ्नो मातृ भाषाको आवश्यक पर्दछ र त्यसैद्वारा मात्र प्रसस्त-मात्रामा देशको उन्नति हुन सक्दछ। जसलाई आज हामी साहित्य भन्दछौं, त्यही नै देश सेवा तथा देशोन्नतिको प्रथम दर्शक हो। यदि साहित्य मूल जरो थिएनभने अंग्रेजी-साहित्यले संसारलाई अधीन गर्न कदापि सक्ने थिएन, अधीन गरेको मात्र होइन जहाँ अंग्रेजी साहित्यको विशेष चर्चा छ त्यहाँका मानिस देशोन्नतिका उच्च-उचच डाँडाहरूमा दौडिरहेको हामी सबैले जानेकै कुरा हो।

अतः—हामीले आफ्नै अन्वेशणद्वारा आफ्नो साहित्य-भण्डारलाई पूर्ण गराई त्यसैद्वारा आफू पनि नेपाल आमाको मुखलाई बालसूर्य सरिको तेजस्वी तुल्याउन सकौं। जस्मा तँ सानो म ठूलो भन्ने र त धनी म गरीब भन्ने जो देशोन्नतिका मार्गमालागिरहेका काँडा हुन् ती संपूर्ण नष्ट भै केवल नेपाली र नेपाली-साहित्य मात्रले अरू कुनै पनि साहित्यसंग दाँजिन सकोस्।

( बाँकी पृष्ठ ६४ मा )

# वर्षातकी यामिनी

—शिव कुमार 'सरोज'

चारै तर्फ नभस्थलभरी कालो र मुस्लो भई,
छायो स्वच्छ अनन्तमा घन घटा कृतान्तको रूप झैं।
वर्षाकी रजनी त्यसैत तमिनी काली थिई घोरकी,
कालो बादल छोपिदा अझ बड़ी नैशाचरीया लिई॥

चम्कन्छे बिजुली "चमक्क चम चं" गर्दै महान् वेगले,
फाट्दै नील विशालको गगन लौ टुक्का दुई गर्दिछे।
काली ती पृथिवी थिइन् चुकसरी घोरै भएकी अति,
गर्छे त्यो चपला प्रकाशमयकी "चाञ्चल्य" आफ्नो लिई॥

आकाशै बिचमा छ त्यो भय दिने कालो घटा मेघको,
गड्की नाद "गटट्ट गटट्ट गटटट् गड् गड़" गरी जोषको।
मानो फीर्दछ व्योमलाइ पविले तोप्ले सरी वीरको,
जोतिन्छिन् पृथिवी सबै "धस धसी" थर्कन्छ वृक्षादिको॥

पानी पर्दछ जोषमा जगभरी आवाज ठूलो गरी,
वर्षन्छन् जल विन्दु "टप्प टप टप्" जोसाण निर्घोष ली।
थोपा ती जलका अगण्य झरना झन्काल रूपैलिई,
वर्षन्छे "झम झं" झमेर अतिनै वर्षातकी यामिनी॥

[ *गुल्मी-थोर्गा भेमरे पोखरा* ]



# प्रेम-अनुसन्धान

—बाबुराम आत्रेय

अनादि कालदेखि अनेक प्रकारका प्रकाण्ड विद्वान्हरूले आज विसौं शताद्बी (जो हाल चल्दैछ) सम्म प्रेमको वारेमा आफ्ना विचारधाराहरूको प्रवाह् वहाई निश्चय गरेका छन् कि प्रेमको वास्तविकता क्या हो ! यसको कसरी सृष्टि भयो इत्यादि ।

प्रेमको वास्तविकता त्यो हो, जसले यस महासागरमा पौडी खेल्दा डुब्लुक्क डुब्की मारी यौटा ढुङ्गाको कोपरामा अड्केको व्यक्तिलाई पनि उतारी तत्स्थानमा तुल्याउँछ एवं उसलाई शक्तिशाली बनाउनमा उत्कट प्रयास गर्छ पनि । यस्तै प्रकारले प्रेम संसारी जीवन निर्वाहको महासाधनमात्र नभएर अद्वितीय उपादान तत्व पनि हुनसक्छ । कुनै यो पनि भन्छन् कि प्रेम स्वार्थ सिद्धिको मूल हेतु हो, त्यस वारेमा हामी प्रत्यक्ष देखौं, जब कि मानिसको जन्म हुन्छ त्यो वालकलाई प्रेमपूर्वक लालन-पालन गर्ने माता-पितामा के स्वार्थ साधनको परिचायकता देखिन्छ ?

यो होइन कि प्रेम स्वार्थ साधनको निम्ति छँदै छैन, किन्तु प्रेम हर प्रकारका छन् जस्तै काम, वासना, विषयक, स्वाभाविक, सच्चा तथा कृतिम आदि । यी मध्ये कम अंशमा स्वाभाविक तथा सच्चा प्रेमले स्थान पाएको देखिन्छ । जस्तै माताको पुत्र प्रति जो प्रेम हुन्छ त्यो हो सच्चा प्रेम यानि उसमा स्वार्थ-साधन लेशमात्र पनि रहँदैन । पुत्र चाहे मूर्ख किन नहोओस माताको हृदय परिवर्त्तित हुँदैन "कुपुत्रो जायेत क्वचिदपि कुमाता नभवति" यसउक्तिले नै

साधारणतया चित्त बुझाउँछ। परन्तु स्त्रीले गर्ने जो प्रेम हो उसमा स्वार्थसाधनको मात्रा अधिक रहेर सच्चा एवं स्वाभाविक प्रेमको पनि कम अंशमा सत्ता रहन्छ। यस्तै प्रकारले मजदूरहरू तथा ऋणी आदिको जो प्रेम हो त्यही कृत्रिम हो जस्तै "गोरू वेचेको साइनो" भन्ने किंवदन्ती प्रसिद्ध नै छ।

यी चीज भए तापनि वास्तविक जीवनको लागि उपयोगी प्रेमको विभाग दुईनै छन्। स्वाभाविक तथा सच्चा। यिनीहरू मध्येमा पनि जति अविनाशी एवं सदुपयोगी सच्चा प्रेम हुन्छ उति स्वाभाविकतामा आवोइन। यस कारणाले सच्चा प्रेमको प्रभाव कहिल्यै पनि मेटिन सक्दैन। मानिसले प्रेम गरोस् त त्यस्तो सच्चा प्रेम गरोस् कि जव तक संसार रहन्छ तबतक सो पनि।

गुल्मी अर्वाथोक



( पृष्ठ ६१ को बाँकी )

साहित्य देश सेवाको मूल पद्धति निश्चय हो। यस विषयमा भारतेन्दु हरिश्चन्द्रले भन्नुभएको पनि छ।

"भाषा आफ्नो उन्नति हुनुनै,
सब उन्नतिको मूल त्यही हो।
आफ्नो भाषा ज्ञान नभैकन,
उन्नत गिरीमा जानेको ?"

एतदर्थः—हामी पनि आफ्नो नेपाली साहित्यलाई तन, मन,धन, वचन, आदिबाट प्रसस्त सेवा गरी स्वदेश, नेपाललाई, मानों मोतिको टुकुरो जस्तो छिटैनै बनाउन सक्ने छौं। अन्त्यमा सबैसंग यहीनै मेरो पुकार छ।

गुल्मी खिदिम हर्वोट,
श्यामशोभा पुस्तकालय।



# उषा

—दामोदर शर्मा ज्ञवाली

तिमी हौ सुषमा-विशोभिनी,
जनताऽऽमोदकरी गरियसी,
शुभबुद्धि दिनेसुभाषिणी !
जनमोक्षार्थं प्रभात कारिणी ॥

वन आज उषे ! परी सरी,
स्मृति गर्ने जनमा सुधा भरी,
गुण मात्र लिउन् सबै जन,
मनका दोष सबै भुलीकन ॥

जति छन् मनुका यी सन्तती,
सब गर्छन् शुभ-शास्त्रमा रति
जननी सरि भै सदा बस
दु:खी जन्को दिल भित्र गै बस ॥

जनको छ मीठो स्वतन्त्रता
सब प्राणीहरूमा समानता
मिली देश फुली फलिरहोस्
रस पाएर प्रजा भुलिरहोस् ॥

रिस राग सबै खतं गरी,
शुभशास्त्राऽमृतको घडा भरी ;
रमणी जनमा युवा सरि
तिमी बस्नु जनमा सदैभरि ॥

अलमस्तहरू उठाउन
सवमा जागरुता सिकाउन
जन मन्दिरमा प्रभा छर !
दु:खिको आंसु विषे दयागर ! ॥

ठूलाखर्क, गुल्मी



# कोदालो हालौं काँधमा

—तिलकराम शर्मा

लौहिड़ साथी ! वारीमा कोदालो काँध हालेर,
झगडा गर्ने बानीलाई डाँडाको पारी फालेर।

नेपाललाई हामीले उज्वल सधैं पारौंला,
सहास छेक्ने पहरा छेडेंर पारी तरौंला।
भाई र बन्धु रिझाउँला सत्यको पथमा चलेर
उन्नतिपट्टि लंकौंला भाई र बैनी मिलेर। लौहिड़०

डाँडा र काँडा मोटर ल्याएर हामी छाडौंला
हिमाली सेतो किरणलाई घरको भित्र पारौंला,
त त र म म छोडेर मिलेर साथै हिडौंला,
जुनेली सेता किरणमा सुखले मायाँ साटौंला। लौहिड़०

देशको नाम राखेर देशको खाँचो टारौंला,
यी प्यारी हाम्री आमालाई झल-झल सधैं पारौंला,
नेपाली प्यारो माटोमा धुलाको बाजी खेलेर,
अन्त्यमा हाँसी अस्ताउँला यहीं माटो भित्र मिलेर। लौहिड़०

*अर्घा कर्णमारे, गुल्मी*



# सच्चा मानव !

—विष्णुप्रसाद ज्ञवाली शास्त्री

विद्या र विज्ञान अगाडि सार,
नेपालका अङ्ग सबै सिंगार,
स्वदेशमै स्वर्ग तुरुन्त झार,
सामन्त डिग्ने सबले लघार।

अर्को कसैको धनमा नजाऊ !
इर्ष्या र डाहा मनका हटाऊ !
इमानदारी भवमा फिंजाऊ,
विश्वासको मार्ग खुला गराऊ।

आलस्य विद्वेष निमोठि फाल,
सत्कार्यको मार्ग नयाँ निकाल,
उत्साह वत्ती मनभित्र-बाल,
संसारमा कीर्ति फिंजाइ हाल।

स्वतन्त्र आत्मा सबका गराऊ
कर्तव्यको मूल नयाँ फुटाऊ !
असत्य, अन्याय परै धपाऊ !
नेपाल भूस्वर्ग छिटो बनाऊ।

टूलाखर्क, गुल्मी



# बिलौना

—होमनाथ शर्मा

लेखनी !
म बन्न खोज्छु, सक्तिन कि ।
भाव छन्
विचार छन्, सबै छ
प्रकट गर्ने पनि उत्साह छ ;
तर पनि लेखनी…!

यो बीसौं सदीमा
"हकसमान" सुन्छु
तर पनि लेखनी…!

कला !
मिसेस् आर्ट !!
किन आज छस् मौन
आफ्नी बनाउन सोच्दछु
अशक्त छु ;
प्रेमी कुनै वियोगी भएजस्तो…
ए बिरहिणी—लेखनी !

अनेकौं चोट सहें—
हिम्मत हारेको छैन
आशा मारेको छैन
लेखनी………।

*गुल्मी वाङ्गला [ पटुवा थुम ]*



# अनेकको एक उत्तर

—जय प्रसाद पाण्डेय

म मेरो मन मस्तिष्कलाई मिलाउन चाहन्छु
वा म—
सुन्दर र प्रियलाई जमाउन चाहन्छु
या म—
मन मस्तिष्क र साथै—
आत्मामा पनि संतुलन चाहन्छु,
सत्य, शिव र सुन्दरलाई बुझ्न चाहन्छु
या यो हो कि म केवल—
त्रिकोणमाथि मनलाई सुन्दर,
मस्तिष्क कल्याणकारी
र आत्मालाई—
आत्मत्वको साथनै रहन दिन चाहन्छु
यस् निम्ति पनि कि-
सत् चित्मा सराबर हुनुनै इष्ट छ मलाई ;
पग - पगमा सत्यलाई-
-प्रियको साथनै नृत्य गराउन चाहन्छु
के भनूँ के, म त—
माया-यवनिकाको पार

यथार्थ र कल्याणकारी अलंकारले शोभित
सरस्वती र लक्ष्मीले सेवित
तुष्टि - पुष्टिले मण्डित,
श्रेय - प्रेयले पोषित—
आनन्दलाई इष्ट तुल्याउन चाहन्छु,
समन्वयशील साम्य चाहन्छु,
पग - पगमा—
शिवलाई जल चढ़ाउन चाहन्छु ;
किन कि म सम्पूर्ण सर्वांगमा—
यस्तै रहन चाहन्छु
यही रूपनै मलाई, मेरो चेतनालाई—
आकर्षित गर्दछ ;
र यस् त्रिकोवमाथि ऊ—
सामञ्जस्य पनि ल्याउन सक्तछ ।
दाहिने - देव्रे, मन - मस्तिष्को पलड़ामा
आत्माको मापले संतुलन गरी—
तराजूको उपभोगनै गर्न चाहन्छु...॥

काशी



# शारदा स्तुति

—कृष्णप्रसाद खनाल

हे शारदे ! शकलशास्त्रसुधास्वरूपे !
हे शुद्धरूपिणि ! जगज्जननी भवानी !
देऊ सुवास मितहासिनी ज्ञानरूपे !
जानी नजानि स्तुति गर्दछु मातृ ठानी ।।

कल्पेर रूपकन खालि अनाथ भक्त
गर्छु प्रणाम अरु गर्न म छु अशक्त
तिम्रै कृपा हुन गए दिल फकिनेछ
लाटो सिधापन पनी रसिलो हुनेछ ।।

जो संझना गरछ चित्तलगाई तिम्रो
मिल्नेछ शान्ति पथको मधुरो उजेलो
यस्ती दयालु जननी ! तिमिलाई धाई
गर्छु प्रणाम पदमा शिर यो झुकाई ।।

जान्दीन पाठ अरुध्यान विधान ज्ञान
बर्वर् गरी वरवराउँछु यै छ खाली
वीणा बजाई मधुरा झिकि गान तान
हाँसेर मोह गरने तिमिमा प्रणाम ।।

जो याद गर्छ मलिनो दिलभीत्र तिम्रो
त्यस्लाई तुष्ट गरद्यौ सब वस्तुले नै
यो अर्त्तिलाई पनि आफनु भक्त जानी
सङ्कष्टबाट गर उद्धृत हे भवानी ।।

अर्घातोस, गुल्मी



# साहित्यको आत्मकथा

—अर्जुन प्रसाद ज्ञवाली

म हिमालयको तलतिर बरने वनदेवीको छोरो हुँ । म खुपै चाहिएको वेलामा जन्मेको थिएँ । मेरो जिऊ सप्रदै गयो । धपक्कै बोल्छ कि भने जस्तो मुख, मृगका जस्ता आँखा, चुच्चे नाक, मुसुक्क हाँस्दा चादीका जस्ता दांत झल्कने, अहो ? यो वालख कति राम्रो हो, यो त नेता हुने जस्तो छ भन्दै सबैले मलाई काख लिन्थे ।

म अहिले युवावस्थाको सिढीमा चड्दै छु । म संसारको मालिक छु, अगम्य, अनन्त छु । म तरवारको धारभन्दा शक्तिशाली छु सारा जगत् मेरा पेटमा अटाउन सक्छ । मेरा साथी धेरै छन् म कसैसित डराउन्न । कुभलो गर्दिन र शरणको मरण पनि गर्दिन । म आत्मविद्यालयको अध्यापक हुँ । त्याग औ बलिदान मेरा विषय हुन् ।

मेरा विद्यार्थी जोशिला, बलिया र टाठा छन् । अन्याय परेमा सान लगाएको खुकुरीको शिकार बन्न पछि हट्दैनन्, हटेनन्, हट्ने छैनन् । आउ तिमीलाई म निःशुल्क पढाउँछु । उत्तीर्ण गराउंछु । जीवनको मूल्यांकन गर्न सिकाउंछु । म सदै पानीमरुवाको रगत तताउंछु मेरो सबैलाई खुशी गराउने वानी छ । सन्मार्ग देखाउने वानी छ र शान्ति दिने पनि ।

शान्ति मेरी छोरी हो । सबै यसैको निमित्त शतशः प्रयास गर्छन् । चक्कर लगाउँछन् । कुनै सुयोग्य वर मिले म उसलाई सहर्ष दिन्छु । शान्ति उसलाई आजन्म मृदु-मुस्कान या मंजु-वाणीद्वारा शान्त गराउँछे ।

—ठूलाखर्क, गुल्मी



# गुल्मेली ! पुकार !

—शिवराज पन्थी

ए प्यारा, देशका तारा ! तिम्रो गर्छ, गुल्मीले पुकार !

वरिपरि झिली-मिली पर्वतको माला,
६ जिल्लाको एक अङ्ग हाम्रो गुल्मी जिल्ला,
स्वदेशको प्राणधान्ने किसानका छोरा,
आऊ आऊ ! तिम्रो गर्छन् प्रेमले पुकार ॥ ए प्यारा० ॥

अब नजाउ विदेशमा स्वदेश मैं वसौं ।
स्वदेशकै खेतबारी खल कम्मर कसौं,
शक्ति सब नेपालकै भक्तितिर लाऊँ,
नेपालमा झिली-मिली नयां स्वर्ग ल्याऊं ॥ ए प्यारा० ॥

नेपालमा झल्किएका हिमालका गुच्छा,
हाम्रो मनो भाव गरुन् संसारमा उच्चा,
भाई हामी फुटयौं भने पाउनेछौं दुःख,
मिल्यौं भने स्वदेशमा वर्षने छ सुख ॥ ए प्यारा० ॥

हेर हेर ! चरी वोल्छे नेपालको जय,
डाडा-काडा बोलाइरेछन् आउ आउ अब,
अन्याय र असत्यको बीज गोडी फाल,
नेपालमैं झललल ज्ञानवत्ती बाल ॥ ए प्यारा ॥

तंघास, गुल्मी



# त्यो

—कृष्ण मुरारि खनाल

लाखौं सुन्दर पक्षिको जननी त्यो राम्रो सफा स्वच्छ त्यो
मृगीका शिशु खेलने वन कुनै नीलो हरियो छ त्यो।
शान्ती साथ अनेक जन्तु चरने उद्यान अर्कै छ त्यो
एकान्त स्थल त्यो नयाँ विपिन त्यो कल्पी न सक्ने छ त्यो ॥

जल्दो शोक हटाउने सरस त्यो साहित्य सङ्गीत त्यो
मैह्लाको स्वर त्यो नयाँ र सुरिलो गायेर गाइन्न त्यो
डाँफे कोयली औ सुगा मयूरको गीतै अनौठो छ त्यो
एकान्त स्थल त्यो नयाँ प्रकृति त्यो कल्पी नसक्ने छ त्यो

झर्ना निर्मल झर्दछन् हरघड़ी झैं प्रेम-धारा छ त्यो
कल्पी भाव खुलाउने कविमहाँ उद्यान अर्कै छ त्यो
मौनी उच्च विचारका रुख उँचा गाम्भीर्य दोश्रै छ त्यो
एकान्त स्थल त्यो नयाँ छ वन त्यो शोची नसक्ने छ त्यो

सच्चा जीवनको यथार्थ पथमा दौडाउने वेग त्यो
प्रेमीको दिलमा सुकोमल हुने नीलो कमल झैं छ त्यो
पापीको मनमा कुतर्क रहने कालो भयङ्कर छ त्यो
एकान्त स्थल त्यो नयाँ भुवन त्यो विर्सी नसक्ने छ त्यो

नेपाली दिलको छहारि रसिलो खोसेर खोसिन्न त्यो
सीता गौतमको सदा प्रियगुफा त्यागेर त्यागिन्न त्यो
चोखो शीतल शान्तिको पथ छ त्यो विर्सेर विर्सिन्न त्यो
सानो किन्तु विशाल चन्द्र-रविको पैलो बिहानी छ त्यो ॥

*धुर्कोट कटौंजे, गुल्मी*



# के कसो हो ?

—स्वामी रमेशानन्द "केसरी"

विचार यै हो जुन लक्षको छ त्यो
अकार्थमानै किन भुल्छ मार्ग यो
यता उता मार्ग दुवैतिर किन ?
बुझिन्न तिम्रो कुन मर्म हो भन

यता यता जो छ उता उता पनि
कता कताको बुझिने सही भनी
यसै गरी जाल बिछाउनै परे
पुगिन्छ कैले उस मार्गमा हरे

विचित्र नौलो किन आज देख्दछु
जता ततै यो भुम - जाल भेट्दछु
कसो कता हो कुन भाव उच्च हो
बुझेर भन्छौ ? कुन कर्म श्रेय हो

यथार्थमा बढ्न भनेर आउने
बिपत्तिको ढोल लिएर गाउने
छलेर हिंड्छौ अझसम्म आखिर
पुगी सक्यौ लौ पथदेखि पल्तिर



# के तिमीलाई याद छ ?

—जिं० अच्युतराज ज्ञवाली

के तिमीलाई याद छ त्यो रात
जब तिमी
टोप् र कोट्स्मेत् लगाई
झ्यालछिम उभिएका थियो
मैले तिम्रो अगाड़ी आफ्ना हात
फैलाई दिएथें
तिमीले उत्साहपूर्वक
मलाई समाएथ्यौ
कोएलको गाना सुरू हुँदातक
मैले तिमीसंग कुरागरिरहेकी थिएँ
के तिमीलाई याद छ त्यो रात
कि म र तिमी
एक कदमको रुखमनी झारको ओछ्याउनामा थियौं
रात्री मन्दगतीले तुषारो पारिरहेको थियो
तिम्रो शिर अनि तिम्रो मेरो छातिमा थियो
उस रात मेरो दिमाग हलुङ्गो भएको ख्याल थियो
के हाम्रो प्रेम कहिल्यै खुकुल्लो होला
ए ! मेरा अन्तर्तमका मित
शीघ्र ही कुनैरातमा आउनु
जबकि अरू आरामले सुतेका होलान्

(बाँकी पृष्ठ ७८ मा)



# तिर्सना रहेछ कस्तो कस्तो

•

—पुण्य "प्रमोद"—

तिर्सना रहेछ कस्तो कस्तो
अनौठाको पोको जस्तो ।

मनको तिर्सना
कसैको यादमा अन्धकार देख्न खोज्ने
वर्षाकालका बादलले
आकाशलाई डम्म ढाके जस्तो
तिर्सना रहेछ कस्तो कस्तो ।

नशैनशाले सम्बन्ध पारे जस्तो
यादै-यादमा अगाड़ि राखेर कुरागरे जस्तो
घटित कल्पना सम्झी
आँखाका नजीकै राखे जस्तो
तिर्सना रहेछ कस्तो कस्तो ।

गरीबको मुख देख्नै नखोज्ने
अर्काको धन देखेर लोभीइरहने
म पनि त्योभन्दा ठूलो हुन्छु भन्दै
इन्द्रका कोषमा चित्त पुऱ्याउन खोज्ने
यो मन रहेछ रबरका टुकुडा जस्तो
लागिरहन्छ मलाई कस्तो कस्तो ।

दया - मोह नभएको
सुखमात्र अँगाली
दुःखीहरू प्रति आँखा फुटाले जस्तो
यो हृदय रहेछ
फलामको टुकुडो जस्तो
मलाई लाग्छ कस्तो कस्तो

थोर्गा च्यूरेक, गुल्मी



( पृष्ठ ७६ को बाँकी )

त कि हामी आपसमा कुरा गर्न सकौं
तब म तिमीलाई आफ्नो दुःखभरी कथा सुनाउँली
किन कि तिमीसंगका कुरा तथा मधुर स्वर्गिकक्षण-
बाट म वञ्चीत भएकी छु
लगन लागेको छ
प्रकाश क्षिण हुँदैछ
साँचो ढोकाको तल रहनेछ
तिमी आएर उलाई सुस्त-सुस्त तान्नु
मेरी आमा सुतेकीनै हुन्छिन्
म विल्कुल जागै हुनेछु
मेरो भाग्य मेरो हातमा छ ।
औ म तिरो साथ जान तैयार छु ।
सम्झन्छौ त्यो बिलौना
के तिमीलाई याद छ ?

—भटकूवा, गुल्मी



# एकदिन अन्तहोला !

—झवेन्द्र आचार्य

दुःखै दुःख देखेर दुःख लाग्दैन अन्त होला,
थाहा छ मलाई त्यो दिन पनि एक दिन यहाँ आउला,
ऊ दिन आउला त यहाँ वहाँ नवीन जोवन् पाउला,
मलीनो मुख कमल जस्तै फुलेर ऊ दिन जाला, दुःखै दुःख···

ओंठमा अहिले कलेटीदेखी लाग्दैन दुःख जाला–
ऊ दिन आउला त-ओंठ-बीच हँसिको लहर छुट्ला,
अधेंरी रात देखेर पीर लाग्दै अन्त होला,
थाहा छ मलाई त्यो रात आउँदा जुनेली यहाँ लाग्ला, दुःखै दुःख···

यो घर थोत्रो देखेर दुःख लाग्दैन अन्त होला,
जान्दछु एकदिन यो घर सुन्दर बनी जाला,
ऊ दिन आउला त-सुखको लता आकाश चूम्न जाला
त्यो देखी हाम्रो शरीर फर्फर खूशीले नाच्न लाग्ला, दुःखै दुःख···

अर्घातोस, गुल्मी



# बौलाहा

—कमलराज श्रेष्ठ

"वाबू !" भनी कसैले कसैलाई बोलायो भने पनि अरुण झस्कन्थ्यो। पृथ्वी भनभनती घुम्थिन्। परको घंटा घरले उस्लाई गिज्याए झैं लाग्थ्यो शून्यमा यौटा आकृति देखिन्थ्यो चल्दो चटपटाउँदो आकृति। छाया मात्र अनि हराउदथ्यो त्यैआकृतिलाई समात्न अरुण दौडन्थ्यो। कुनै चीजमा ठक्कर खाए मात्र उस्को वेग रुक्दथ्यो। नत्र सोझै दोड़िरहन्थ्यो। उस्ले सोंच्दथ्यो, त्यो आकृति उस्को अमूल्य संपत्ति हो, त्यसैमा उस्को जीवनको आधार आधारित छ। अनि त्यसैमा उस्को रगतको थोपा पनि छ।

"ए वाबू···!" भनी कसैले माथि झ्यालवाट के भन्न भ्याएथ्यो, अरुणलाई चस्का पऱ्यो ऊ झस्क्यो। कस्ले, कस्लाई के भनेको हो? उस्लाई थाहा थिएन। उस्ले "ए वाबू···!" भन्दा अघि-पछिका शब्दहरू केही सुनेन। पृथ्वी भन-भनती घुम्न थालिन्, रुखहरू नाच्न थाले, हवाले गाउन थाल्यो, घंटा घरले "ट्वाङ्! ट्वाङ्!! गरेर बाजा वजाउन थाल्यो भनौं, या अरुणलाई गिज्याए झैं गर्न थाल्यो। मानिसहरू नाच्न थाले। दाँत किच्च पारेर गिज्याए झैं लाग्यो। शून्यमा उही आकृति देखियो चल्दो चटपटाउँदो। केटा-केटीहरू "वौलाहा!" "बौलाहा!!" भनी अरुणका पछि लाग्न थाले अरुण एकदम चिच्यायो "दिदी!!" उतबाट यौटा ट्रक वेतोडले दौडेर आउदै थियो ड्राइवरले रोकन नखोजेको पनि हैन, हार्न नबजाएको पनि हैन, तर "एक्सी-डेन्ट" भन्ने कड़ा शब्द कान भित्र सकी नसकी नकोची सुख भएन।

× × ×

अरुणका बाबु–आमाले, पीठ फर्काएर, नफर्कने बाटो लागे पनि अरुण-लाई दिदी ( शीला ) ले राम्रैसंग पालेकी थिइन्। भनौं या सास फुस्कने वेलामा आफ्नी आमाको अन्तिम वचनको पालना गरेकी थिइन्। जसो भने पनि अरुण हुर्कियो। दिदीले धरै दुःख सहेर अरुणलाई मिडिल स्कूल पास गराएकी थिइन्। अबभने, अरुणकी दिदीलाई कष्ट हुन थाल्यो अरुणले भनेका कुरा पूरा गर्न कठीन हुन थाल्यो। आमाको आज्ञाको पालन नहुने भयो। अँस्ति मात्र अरुणलाई फीस दिन पैसा नभएकोले आफ्नो नेकलेस ( सिक्री ) वेचेर, "भाईलाई सुखसँग हुर्काएस्, दुःख नदिएस् यही तेरो कर्तव्य हो" भन्ने मातृ आज्ञालाई पालन गरेकी थिइन्। तर अरुणलाई भने केही थाहा थिएन कि कहाँबाट पैसा आउछ। दिदीले उस्को लागि के के गरी अनि के के गर्दै छे त्यो उस्लाई केही थाहा थिएन। बस! उस्लाई त, शीलाको साड़ीको टुप्पा समाएर पछि लाग्नु मात्र थियो। अब भने ( स्कूलका साथीहरूले गिज्याएको हुनाले ) शीलाको साड़ीको टुप्पा समाउन छोड़ेको थियो, तर पछिलाग्न भने छोडेको थिएन। हुन पनि पछि किन नलागोस्, उस्को जीवनको आधार, बाबु, जे भने पनि उनै थिइन्। ऊ बाहेक यो गोल भकुण्डै जस्तो पृथ्वीमा को थियो र ?

शीलाले के के–सोच्दै थिइन् अरुण ढ्याक-ढ्याक गर्दै आयो, अनि नाच्न थाल्यो। अरुणकी दिदी केही क्रोधित स्वरमा भनिन् "बाबू! तिमी कति केटा-केटी, भइरहने!" त्यस वाक्यमा स्नेहको मात्रा पनि मिसिएको छ, भन्ने अरुण-ले थाहा पाइहाले। अनि उ झन उफ्रन थाल्यो। "दिदी!!" ई वाए!!! भन्दै यौटा नीलो लिफाफा देखायो। अरुणले आठ क्लाससंम पढेको थियो तापनि उस्को केटाकेटी-पना अझै गएको थिएन। दिदीले चिठी हेरिसके पछि भनिन् "साथी भएर पनि, एति लेखेन भने, के साथी भयो र ?" त्यै त म भन्छु भोली टीकाको दिन साइत पनि राम्रो छरे, हेर्नुहोस न, "कति राम्रो नोकरी मिल्छ" भनी लेखेको अरुण अझै उत्हासले भरियो।

"यो के भनेको ? तिमी देहरादून जाने ? आखिर तिमिलाई के त्यस्तो पऱ्यो कि तिमी देहरादून जाने, परदेश जाने। मेरो कलेजाबाट छुटेर टाढा जाने ? अनि मौन भइन् वातावरण शान्त भयो। शीलाले मनमनै भन्न



# सुन्देन-पंछी

—गणेशप्रसाद भुसाल

सुन्दे न सुन्दे ए मेरी पंछी यो दिलको पुकार
बिहानीपख भैसक्यो अब यही छ खबर
यो नौलो सन्देश बोकेर पंछी डाँडार काँडामा
छरिदे चाडैं ए मेरी रानी कुना र कुनामा
विहानीपखको यो नौलो लाली यो स्वच्छ हावाले
सुतेका जागुन् जागेर देखून् आनन्दी मनले। सुन्दे…
के रहे छ कस्तो भएको रहेछ र कस्तो हुंदैछ
यो सव देखून् देशका भाई यसमा कस्तो छ
ए मेरी पंछी यो दिलको धड़कन् पुऱ्याइ दे सवमा
उत्साह गर यो पख राम्रो लालि छ सबमा। सुन्दे…

अर्घा कुडापानी, गुल्मी





थालिन् "ईश्वर ! म यति अभागिनी छु कि, मैले सबकुछ, धन, इज्जत, लाज, कौमार्य, सतित्व, सब गुमाएर पनि मेरी आमाको आज्ञाको पालन गर्न सकिन ? के मेरो भाईको सुख देख्न सक्दिन ? मेरो भाईले दुःख गर्ने ?" शीलाका

आँखामा गहीरो समुद्र बन्यो, काला नानी गहराई, त्यै गहराइको सतहमा दिदीको ममता र स्नेहको माछो दौड़दै थियो, पछि-पछि अरुणको हटको गोही।

अरुणले हठ छोड़ेन "दिदी म जान्छु के मेरो कर्तव्य हुन्छ कि, मेरो आमा बाबुले दुःख गर्नें, म गर्नें मोज ? तपाई मेरा आमा-बाबु हुनु हुन्छ म सँधै सुख गर्ने तपाई सधैं दुःखि ? यो कहिल्यै पनि हुन सक्दैन। म जान्छु। मेरो मनले के भन्छ तपाईलाई थाहा छ ? सायद छैन होला। मेरो मनले सँधैं तपाईको सुख देख्न चाहन्छ। यसैमा मेरो सुख छ यही मेरो कर्तव्य पनि हो। अनि प्रश्न उठछ कि, "आयको श्रोत ?" अरुणको मुख-मुद्रा गंभीर भयो। "आयको श्रोत" भन्दा शीला झस्किन। अनि उनलाई स्वीकृती गर्नुनै पर्यो। जेभए पनि अरुण पढेकैन ठह्र्यो।

× × ×

पैल्ये, पैल्ये भनि सेठ रतन मानजीले शीलाको कौमार्य पैसा धोकेर खरीद गरे तर अब भने सुस्त-सुस्त, शीलाको जवानी ढल्दै गएकोले हो वा, अरू कुनै कारणले हो, सेंठले शीलावाट पञ्जा छुटाउन थाले। शीलाको विवशतावाट लाभ उठाएको सेठ अब क्रुर गद्दार बन्न कदम उठाइरहेको थियो तर मञ्जिलसंम पुग्न चान्स परे को थिएन।

( वास्तवमा यदि पुरुष नहुँदो हो त, पृथ्वीवाट गद्दारीनै हराउने थियो प्रश्न उठदछ कि सृष्टी ?' हो पुरूषविना सृष्टि हुँदैन तर विवश स्त्रीको विवसतावाट लाभ उठाएर उस्लाई कर्तव्य पथवाट च्यूत गराएर दुस्कर्म पट्टि लैजाने, पुरुषनै हो पुरुषविना स्त्री कदम चालन अशमर्थ हुन्छे। यसरी नै कैयौं स्त्रीहरू वेचिए होलान्। कैयन वेश्या भए होलान्। )

छ मंनापछि……।

*एक दिन शीला विवशता बस सेंठकहाँ गइन् । सेंठजी भित्र कसै सँग कुरा गर्न थालेका रहेछन् । आवाज कुनै टिटीको पनि थियो । सायद कहीं टिटी दुस्कर्मीका हातमा पर्छु क्यारे !*



# सुखको कल्पना

—इन्दिरा

दुःखीको दिलमा पनि सुख लुकेको हुन्छ
उसको कल्पना पनि कहीं उडेको हुन्छ
तर पनि मेरो सुखानुभूति
दूःखले भिजेको हुन्छ
स्वप्न देख्छु मात्र कल्पना

नैराष्यले दौडाउछ
आशा अंकुर वैलाउँछ
के आँधी त आएर गएको ह्वैन ?
उसको आस्तित्वनै हराएको हुन्छ ।

गुल्मी



*धेरै बेरपछि ढोका खुल्यो, भित्रवाट यौटी यूरोपिन डिजाइनकी आधुनिका आधुनिक ( हवाखाने ) ड्रेसमा वाहिर निस्किन् । केही बेरपछि शीलाले भित्र प्रवेश गरिन् सेठजी नून खाएको कुखुरो झैं झोंक्रिएका थिए । सायद कुखुरोले नून खाएछ क्यारे !*

शीलालाई देखनासाथ उनी झस्किए। शीला गंभीर हुदै भनिन् "मलाई थाहा थिएन कि, तपाई यति नीच हुनु हुन्छ। म तपाईलाई आफ्नो पतिनै सम्झन्थें। तपाईंको वचन पनि थियो कि अरुणलाई करोड़पति बानाउने अनि मलाई··· ? यसभन्दा पछिका वाक्यहरू तपाईंलाई पनि थाहानै-छ। खैर, तपाईं डराउनु पर्दैन मैले, जे गरे पनि तपाईंले स्वीकार गर्नुनै पऱ्यो किन कि तपाईं मेरो परमेश्वर।" तपाईंलाई गाली गर्न म आएकी हैन बरू विन्ती गर्न। "सेंठको चेहरा रातो भयो। के विन्ती गर्न ?" उनको आवाजमा भय पनि मिश्रित थियो। शीलाले आफ्नो बढ़ेको पेटतर्फ इसारा गरिन्। "हूँ!" सेंठ पसिनाले तर-तर भए। उनी अझ बढता भयभीत भए। विचारा सेंठको अगाडि कोही हास्य कवि भएदेखि पाठकहरूलाई पेट मिच्न पर्दथ्यो होला।

सेंठले पसिना पुछ्दै भने "जति खर्च लागे पनि दिन्छु औषधी खाईदेउन एकै मात्रामा चट !"

"वाह ! मोज गर्दा होस भएन, ऐले भ्रूणहत्यातिर लाग्ने ? वाफरे, के यो उस्को बाबु आवाज हो ? पाप गर्ने तिमी फल भोग्ने यी मासू म फूलको कोपीला हैन !" शीलाको चेहरा रातो भयो।

"तँ फेरी ; के चाहन्छेस् ?" सेंठ गर्ज्यो। यही कि मलाई स्वीकार गर्नोस्।" शीलाको चेहरा दयनीय देखियो। "वाह ! मेरो यतिका दौलत देखेकी छस्, तेरा रण्डी तँ त रण्डी पो होस, वेश्ये ! तलाई त मैले पैसा दिएको छु। भाग यहाँबाट तेरो कुरा कसले सुन्छ ? तँ, त मेरो पैसा देखेर पो आएकी होस। होस गरेस आयन्दा केही बोलीस भने तेरो ज्यान···!"

"वाहरे सेंठजी तेत्रो धंकी ? मैले चिच्याई-चिच्याई भन्छुकि यो तेरो छोरोहो यस्को बाउ रत्ने हो। म ऐले जादैछु। तलाई चेतावनी दिन आएकां हुम्।

× × ×

"को हुँ ?" सिङ्गै निल्ला जस्तो कालो अँध्यारोमा शीलाको प्रश्न हरायो उत्तर कहींबाट पनि आएन। शान्त भयो चल वल हरायो। शीलाले बत्ती बालिन् र आवाज आए पट्टि हिंड्न्। एत्तिकैमा अचानक पछाडिबाट यौटा हात आयो र उनको मुख टालियो। अनि यौटा कालो मुसुण्डे अगाडि आयो "बोलीस भने मार्छु" भन्दै छुरी देखायो अनि शीलाको मुखमा कपड़ा बाँधिदियो। त्यसपछि हेर्न नसक्ने दृश्य त्यहाँ देखियो। बत्ती निभ्यो। धेरै बेरपछि मुसुण्डेले बाल्यो। अनि त्यहाँको दृश्य पत्थरले समं देखको भए पनि पगलिने थियो। शीला त्यसै पल्टेकी थिइन साड़ी रगताम्य भएर पनि नपुगेर पर ताल परेको थियो। अलि पर यौटा रगतको अभागी डल्लो उछीट्टिएको थियो। अनि कुनै चीजमा छुरी गड़ेको आवाज शून्यमा मिल्यो।

× × ×

अरुण पैल्ये त सिपाहीमैं भर्ति भएथ्यो तर उसको बीरताले गर्दा एकै चोटी कप्तान भएको थियो।

एक दिन, कप्तान अरूण बिहान नहाई धोई गरेर सिपाहीलाई चाय ल्याउने आदेश दिएर अखबार हेर्न थाल्यो। एकाएक उसको आँखा टक्क गएर एक ठाउँमा अडिए।

त्यो थियो-माथि यौटी ठिटीको तस्वीर तल लेखेको थियो "काठमाण्डू १० चैत आज असन टोला बस्ने 'शीला' नामकी यौटी आइमाईको कोही हत्यारोले हत्या गरिदियो। छातीमा छुरी, साडी रगताम्य, यौटा अभागी रगतको डल्लो पर उछिट्टएको, पुलिस हत्याराको तलास गर्दैछ।"

"दिदी !!" भन्दै अरुण चिच्यायो अनि हिंड्यो।

अब ऊ भौतारी हिंडन थाल्यो उस्लाई सबले "पागल ! पागल !!" भन्न थाले। केटा-केटी पछि-पछि लाग्न थाले केटाकेटीहरू एकै स्वरमा भन्थे

( बाकी पृष्ठ ८७ मा )

# बिहान

—चोलराज शर्मा
हे० मा० म० वि० बो० हाईस्कूल, वल्कोट

शान्त समीर द्रुत गतिले चलिरहेछ,
नील-गगन चरा चुरुङ्गीले गुञ्जिरहेछ,
दुवाका टुप्पा-टुप्पा टलपल शीत टल्किरहेछ,
मानवले प्रकृतिको सौन्दर्य लुटिरहेछ।

अहहह, हेर ! प्रकृतिको अनूप छटा
हाँसी-हाँसी प्रकट गरिरहोछन् धैर्यता।
अङ्कमाल गर्दछिन् प्रेमाश्रु वर्षाई—
सब प्राणीमा पुत्रवत् प्रेम दर्शाई।

शिक्षा दिई रहिछन्—"सत्यं, शिवं, सुन्दरंको"
फूल फुलाई दिइरहिछन् मानव अन्तस्करणको।



---

( पृष्ठ ८६ को बाँकी )

"थुइ बौलाहा, थुइ" भन्दै थुक्ने गर्दथे केटा-केटीलाई कसैले गाली गर्दैनथ्यो अरुए "दिदी !!" भन्दै दौड़न्थ्यो कसै-कसैले त "बौलाहा !" भन्दै एक दुई थप्पड हान्दथे।

समाज कस्तो छ ? मानीसलाई बौलाहा बनाउने समाज हो। तर उस्को वेदना जान्ने को ? उस्को मर्म बुझिदिने को ? उस्को जीम्मेदार को ?···

—थोर्गा गुल्मी



# काल्पनिक जीवन

—"शरद"



ए भावना कल्पनाहो !
उराठ लाग्दो यस धरतीमा,
जहाँ मानवको मूल्य छैन,
खालि जीवनको बर्बादी छ ।
ए टीठ लाग्दा भावना !
ए दया लाग्दा कल्पना !
तिमीहरू किन कठपुतली झैं,
मानव-मस्तिष्कमा नाचिरहन्छौ ।
मानव जीवन झैं,
तिमीहरूको जीवन पनि क्षणिक छ ।
ए मेरा प्यारा कल्पना, भावना हो !
तिमीहरू फेरि पनि—
नगर प्रयत्न मस्तिष्ममा नाचिरहने ।
किनभने सत्यतामा
पाउन सक्तिन तिमीलाई म
नरोक मलाई कल्पना भावना हो !
गएं म टाढा धेरै टाढा
यस धरतीवाट धेरै टाढा
जहाँसम्म यसको अन्त हुन्न
नगर प्रयत्न रोक्न मलाई
जहाँ हाँसो छैन आँसु छ ।
दया छैन द्वेष छ ।
खास त जीवन छैन मरण छ
झूठो घिनलाग्दो
यस संसारदेखि—
मुखमा नअट्ने गरी,
अघाइसकेको छु ।
अति चीर कालसम्म घिनाइसकेकोछु

रिड़ी, गुल्मी



# गति

•

—तारेन्द्र—

सूर्यको तापले पानी क्यै
सुस्त-सुस्त घट्न त घट्छ,
तर कुनै असर पर्दैन
बस, लगातार उम्लिएर बढ्दै गैरहन्छ
ठूलो खोलामा

मलाई याद आउँछ
म सानो छँदा, घरको पारिपट्टि
पहराबाट खसेको
एक सिम-सिमे झरनाको पानी ।
(सूर्यको तापले
ऊ तात्न त ताद्द थ्यो
तर सुकेर जमीन् बन्दैनथ्यो…)

मेरो संग-संगै
बढ्दै गयो मेरो गति
पहराबाट तप्केको झरना
उत्तेजित खोलाको भेल बन्यो ।

भट्कूवा, गुल्मी



गताङ्कको घिड़्किसो—

# कालीको सौन्दर्य

•

—लाटो साथी कपिलवस्तु—



ल्याइ दिए है।

के?

ठूलो मटर। माया भए पो संझिन्छ त

ए : साँचि चुरा टिकी!

हुन्छ, भन्दै कान्छो डोको भिरेर दुगुर्दै सँगी भेटाउन पुग्यो। काली त्यै नेटामा बसेर उसलाई एकछिनसम्म एक झिमिकसम्म नगरी हेरिरही। त्यो सोच्दै पनि थिई कहीं डोको सोको हुत्त हुत्याएर मोटरमा भुर्र गर्दै उसको कान्छो लाहुरतिर सुइँकने त होइन? तर उसलाई विश्वास थियो, कान्छो अवश्य फर्कन्छ उसले त्यसलाई विर्सेर लाहुर पस्ने दुःसाहस गर्दैन, अवश्य गर्दैन।

पखेराको तेर्सो बाटोबाट मधेस झर्ने माल चरा झैं भएर जान थालेको ढाकेको लस्कर बराबर एकैनास चालिएका हातखुट्टाले गर्दा कवाज खेलने फौजको दुरुस्त प्रतिलिपि लिएको छैन भन्न गाह्रै पर्दथ्यो। ती नयाँ नयाँ तन्नेरीको नयाँ जोश र नयाँ रागले गाएको नयाँ गीत देख्ने सुन्ने अन्य बाटाहिंड्नेको घाम र थकाईले थाकेको गलेको जिउमा, धेरै बेरसम्म पानी खान नपाउँदा सुकेको ओंठमा पनि नयाँ शान्ति र उत्साहको लहर झुलन्थ्यो।

अर्काको नून खान परेपछि नूनको सोझो गर्नै पर्दछ। हलको गोरुले मेला जाने दिन आज थाकेको छु भनेर छुट्टी पाउदैन। पराधीन भएपछि

रुन मन लाग्दा हाँस्नु पर्दछ, बोल्न मन हुँदा मौन बन्नु पर्दछ। उसले अर्काले अड्कलेको नखाई, अह्राएको नगरी, दिएको नभिरी सुखै छैन। नत उसले आफू खुसी साँस लिन पाउँछ नत आफ्नो मनको सोच्न संझन पाउँछ। फलस्वरूप पराजुली बाजेले आफ्नी छोरी पुतलीको सुसारे बनाएर कालीलाई तानसिन पठाउने निधोगरे। एकहोरो विचारका हुनाले उनको

# आशा

—'अल्छी' गोपाल पाण्डेय

आशै-आशाले-
चुमिरहेको यो छाती
प्रतिपल यसमैं—
जलिरहेछ।
छातीको पींधदेखि तालुसंम
आशाको एक महल बनिरहेछ।

आशा एक यस्तो आशा
यो जिन्दगीनै
भुलिरहेछ यसमैं—चलिरहेछ,
यो अन्त कहिल्यै हुँदै नहुने
प्रतिपल झन् झन् बढ़िरहेछ,

वढ़छ झन्-झन् मनको आशा
पूर्ण आशा हुँदै हुँदैन,
अपूर्ण आशा बढ़िरहेछ
जगको जीवन यसमैं बित्छ

लक्ष्मीपुर तंघास, गुल्मी



निर्णयमा कसैले टीका टिप्पणी गर्ने या एक आखर पनि नाहि-नास्ति गर्नु खोज्नु केवल व्यर्थ चेष्टामात्र हुन्थ्यो। अबोध, अशिक्षित काली यो सबै खटन मात्र विवश थिई तर उसलाई कान्छासंग अन्तिम भेंट गर्ने, ऊसँग विदाहुने चिन्ताले व्याकुल पर्न थाल्यो, तर यो कुरा अरू कसले जानोस, कसले बुझोस् , उसको वेदना कपाल दुख्ने पीड़ा जस्तो अरू कसैले

थाहा नपाई दुख्न थाल्यो, तर मलिन र चिन्तित मुखाकृतिले कसैले विचार गरेको खंडमा विरामी भएको ठहऱ्याउन नसक्ने होइन। काली चिन्ता ग्रस्त भई, उसले साँझ भात पनि खाइन, पात पनि गाँसिन, वात पनि मारिन। त्यसले त्यस दिनको लामूरात केवल कोल्टो फर्केर विताई।

---

## मेरो प्रेम

—जिं० मु० प्र० प० राम प्रसाद "विनीत"

प्रेम छ मेरो अत्यन्त राम्रो पहाड़को माटोमा,
खुशीले रंछ यो मेरो मन पहाडी गाउँमा।
सूर्यको झुल्को यै मेरो गाउँमा पैलेनै पर्दछ,
सूर्यले चुम्दा यो मेरो गाउँ चमक्क चंकन्छ।
तितरी पंछी गाउँछे मीठो पर्वती गाउँमा,
कोयली गाउँछे मयूर नाच्छे वनको झाडीमा।
सर्स्यूको वारि-बीचमा घुमी मौरीले गाउँदछन्,
यै वारि भित्र ढुक्कुर ढुक्कुर् ढुकुर वास्दछन्।
मिलेर सधैं गाउँलेहरू सुखले वस्दछन्,
आटो र पीठो आफैले उब्जाई निर्धक्क खाँदछन्।
छलर कप्टी केही छैन यहाँ सब सत्य बोल्दछन्,
अन्याय गर्न जान्दैनन् यिनी न्यायलाई छाड्दैनन्।
पहाड़ी माटै शुद्ध छ साह्रै अशुद्ध कहीं छैन,
यहाँको गुण गाएर मैले कहिल्यै सक्दिन।
यो जस्तो ठाउँ खोजेर मैले कहींनै पाउँदिन,
यस्मैं छ मेरो पवित्र मायाँ यस्मैं छु मगन।

खाँची ढिकुरा, गुल्मी

---

वाजेले हेरेको साइत भयो। सबै जना भारी-तारि टाम-टुम पार्ने तर खरमा लागे, तर कालीको मनमा अर्कै चिन्ता थियो, त्यो पीढीको गाग्री टप्प टिपेर पधेरा गई, उसले घरि-घरि खोलाको तेर्सो बाटो हेर्दथी हुन सक्द छ त्यसको ढाक्रे नून लिएर आउँदै छकि? उसले बाटामा आउने जाने ढाक्रेको वगाल प्रशस्तदेखी नदेखेकी होइन, उसको दुर्भाग्य, दैवको खटन

पनेलाको कालो टोपी, धुपछायाँको टल्कने इष्टकोट, खागीको जाँगे लगाए-की उसको कोसेली लिएर आउने ढाक्रेलाई हुलाकीमूलबाटो छोडेर गाँउ तिर उकालो लागेको देखिन।

लाली गुराँस फुलेको हरियो वन आगो लागे जस्तो देखिन्थ्यो। अल्गो लेखबाट खस्दा धागो छिनेर खसेका पोते जस्ता देखिने धेरै तल ढुंगामा बज्रेर छरिएका ती पानीका जल-कण उसको छिया-छिया परेका मुटुका टुक्राको प्रत्यक्ष उदाहरण थियो। सुसाउदै कल्कलाउँदै बगेको खोलो, कालीले कान्छोलाई माया मारेर गएको सन्देश पुऱ्याउन आत्तिदै दगुरे झैं मधेस तिर बग्दै थियो। लेखतिर चर्न जान थालेका गाई वस्तु कालीलाई फर्काउन गएजस्तै पछि-पछि उकालो चढ्दै थिए, तर काली फर्किन। उसको मन फर्कन चाहन्थ्यो, तर पराधीनताले उसलाई अगाडिनै तान्दथ्यो।

नेटामा पुगेपछि कालीले कहिले नविर्सनेगरि पछिल्लो पल्ट आफू बसेको झुप्रो, गाई वाख्रा हेर्ने वन, घाँसपात गर्दा जाने आउने गोरेटो, दाउरा पराल विसाएर थकाई मार्ने चौपारी, वाङ्गेटुटाको कान्छाको गाई-गोठ, सबैलाई राम्ररी हेरी। सबैले मूक भाषामा उसको विवशतामा सम-वेदना प्रकट गरे जस्तो लाग्यो उसलाई। कालीले आँसुको मूल रोक्न सकिन, मुटुको वह खप्न सकिन, मनको दुःख लुकाउन सकिन। धौरालीमा बसेर ढुङ्गा फाल्न थालेकी च्यान्टीलाई वोलाएर ऊसंग के हो कुन्नि खसा खुसु कुरा गर्न थाली।

बाटामा भेटिने ढाक्रे, आकाशमा उड्ने कौवा, पखेरामा गाउने चरी, खोला-मा खेल्ने माझी, सबैलाई कालीले टक्क रोकिएर हेर्दथी, मानूँ मूकभाषामा कान्छोलाई आफ्नू सन्देश पुऱ्याइदिने अनुरोध गर्दैं थिई। आँखामा छचल्किने आँसुले बाटो पनि धमिलो देखिन्थ्यो। गोड़ामा जुत्ता नहुँदा ठेस लागेको चोर औंलाको घाउ घरि-घरि छुनाक्किन्थ्यो, शायद कालीलाई फर्कने कुरा सूचित गर्दथ्यो, तर कालीले कसैको केही सुनिन। आफ्नू हृदयलाई निष्ठुर बनाएर त्यो हिंडीनैरही। अन्त्यमा केही क्षणपछि त्यो डाँडा, भीर-पखेरा, वन जंगल, सबैबाट, जो उसका परिचित थिए ओझेल भई।

(क्रमशः)





# देश-निर्माण

—नेत्रलाल उपाध्याय

जून् मांसहारी चितुआ समानका,
अन्यायको मार्ग ढुकी बसेका।
यी हुन् गरीबीहरूलाई चुस्ने,
घृणा नमानीकन पेट भर्ने॥

आँलो ठडचाइकन डर् सधैं दिने,
दश्को गरे तंसुक सौ बनाउने।
लौ न्यायको लाठी लिएर हातमा,
हटाउँ चाँडै अब दुष्ट देशमा॥

लाटा सुधा भाइहरू ठगेर,
रमाउने यी धनी छौं भनेर।
कोइ भाइको सब घर वार नाशने,
रुवाइ ती भाइ विदेश् पठाउने॥

देशोन्नतिमा पनि बिघ्न पार्ने,
आफ्नै सधैं मात्र विकास गर्ने।
यिनलाई चाँडै अब लौ हटाउँ,
विकासको निम्ति कदम बढाउँ॥

खुलेन निद्रा अझ हामीमा किन,
वितिसक्यो देश सुधारने दिन,
यो "देश-निर्माण" प्रति सबैले,
चलाउँ पाउ नरुकि कसैलै॥

झिस्ती, वाग्लुङ्



